तन्नेरी डटकम वर्ष : १ ✡ अंक : १ ✡ सन् २००९, फेब्रुअरी (२०६५ साल माघ-फागुन) मूल्य रु. ३०/-
का.जि.प्र.का.द.नं.

# यस अंकभित्र





## देवकोटाको घर कन्तबिजोग १६

साहित्यका पारखी सबैलाई कविकुञ्ज एउटा कठोर व्यङ्ग हो । सरकारले क्षमता भईकन पनि उचित ध्यान दिन नसक्नु विवेकहीनताको सूचक हो ।



## योग्य विमानचालक कसरी बन्ने २५

ज्यादै खर्चिलो भएकाले अध्ययनमा जानुभन्दा अगाडि अनेकौं पक्षको विचार गर्नु जरुरी छ । यसरी जानकारी लिने सबैभन्दा सजिलो उपाय भनेको पाइलट कोर्स पूरा गरेका अथवा अध्ययन गर्दै गरेकाहरुसँगको परामर्श नै हो ।



## रमेश विकलबाट सिक्ने कुरा २६



## एक गोठालोको आत्मकथा ४



## शब्दजरा २०



## म गीतकार पनि भइहालें १२

**प्रकाशक/सम्पादक** : विभोर बराल, **सम्पादन मण्डल** : निर्मलकुमार थापा, जनक पौड्याल, **तन्नेरी समूह** : अर्चना दाहाल, रेणुका ढकाल, किरणकुमार मगर, तगेन्द्र मगर, **व्यवस्थापन समूह** : विपिन मिश्र, विक्रम श्रेष्ठ, विनोद ढकाल, अनील खनाल, ध्रुव सापकोटा, **आवरण कला** : सचेन मानन्धर, **कम्प्युटर टाइप** : पुष्पविक्रम शाही, **फोटोग्राफी** : डीडी बस्नेत, **लेआउट** : बाबुराम दाहाल

तन्नेरी मासिक कमलपोखरी, काठमाडौं पो.ब.नं.: २६५३४, काठमाडौं फोन नं.: ४४३५४७७ इ-मेल : tannerimonthly@gmail.com

आजभन्दा चार वर्षअघि केही उत्साही तन्नेरीहरूको सहकार्यस्वरूप तन्नेरी डटकम अनलाइन पत्रिका प्रकाशन आरम्भ भएको थियो। नेपाली अनलाइन पत्रकारिता भर्खर बामे सर्ने अवस्थामा रहेको बेला साइबर स्पेसमा झुल्किएको यो इ-पत्रले साहित्य, कला, चलचित्रलगायत विभिन्न क्षेत्रहरूमा केन्द्रित भई छोटो समयमै देश-विदेशमा रहेका लाखौं नेपाली पाठकमाझ आफ्नो दरिलो उपस्थिति जनाउन सफल भयो। दस हजारभन्दा बढी दैनिक हिट हुने tanneri.com पत्रिकाको उपस्थितिलाई इन्टरनेटको साथै प्रिन्टमा पनि विस्तार गर्ने योजनाअनुरुप यो पत्रिका तपाईंहरूको हातहातमा आइपुगेको छ।

युवावस्था अनेकन संवेगहरूको पुन्ज हो। युवाशक्तिलाई परिवर्तनको संवाहकका रूपमा सबैले स्वीकारे पनि 'उपयोग गर र फ्याँक' मानसिकताले ग्रस्त समाजका अगुवाहरूका कारण युवाहरू पछि परेको सर्वविदितै छ। आफ्नो कुरा सुनिदिने, बुझिदिने तथा मनको बह पोख्ने माध्यम नभेटेका कारण अनेक प्रतिभाशाली युवाहरू भड्किएका छन्। उपयुक्त वातावरण तथा मार्गदर्शनको अभावमा यो उमेरमा बाटो बिराएकाहरूको संख्या कहालीलाग्दो छ। तन्नेरी डटकमलाई साझा प्रतिभा पोख्ने चौतारीको रूपमा विस्तारित गर्दै लैजाने हाम्रो सोच छ।

भूमण्डलीकरणको यो युगमा प्रतिभाशाली नेपाली युवाहरूको पहुँच अन्तर्राष्ट्रियस्तरसम्म पुऱ्याउनुका साथै अन्तर्राष्ट्रिय जगत्का ख्यातिप्राप्त तथा सिर्जनशील युवाहरूसँग सहकार्यको बाटो खोल्ने माध्यमका रूपमा यो पत्रिकाले आफूलाई उभ्याउनेछ। बढ्दो बेरोजगारीका अनेकन कारणमध्ये सही सूचना नपाएर बजारको मागअनुसारको सीप विकास गर्न नसक्नु पनि एक हो। हामी हरेक अंकमा रोजगारीका अवसरहरूको बारेमा अनुसन्धानात्मक तथा तथ्यपरक सामग्री प्रकाशित गर्दै जानेछौं। समाजका सफल व्यतित्वहरूसँगको भलाकुसारी तथा प्रेरक प्रसंगहरूले पाठकहरूलाई उत्तप्रेरणा प्रदान गर्नेछ भन्ने कुरामा हामी विश्वस्त छौं।

तन्नेरी मनहरूलाई केन्द्रबिन्दु बनाउँदै समाजसँग जोडिएका विभिन्न आयामलाई प्रकाशनमा ल्याउने हाम्रो उद्देश्य छ। एक सम्पूर्ण डाइजेस्टका रूपमा आफ्नो उपस्थिति कायम गर्ने अभिलाशाका साथ तन्नेरीडटकम मासिक तपाई पाठकहरूसमक्ष आइपुगेको छ। पाठकहरूबाट सुधारोन्मुख सल्लाह, सुझाव तथा सद्भावको आशा गर्दै वेबमा झैं प्रिन्ट माध्यममा पनि तपाईंहरूको निरन्तर सहयोग रहनेछ भन्ने कुरामा हामी विश्वस्त छौं।

# z'esfdgf!

### डा. शान्ता निरौला

*सहप्राध्यापक मनोविज्ञान विभाग, त्रिवि*



तन्नेरी अवस्था उत्साह, उमंग तथा सक्रियताका साथै विभिन्न तनावले पनि भरिएको हुन्छ। तन्नेरी मनहरूलाई लक्षित गर्दै प्रकाशन हुन लागेको यो पत्रिका तन्नेरीहरूका लागि आफ्ना भावना, संवेदना, हर्ष तथा विस्मात् पोख्ने थलो बन्नुपर्छ।

युवाशक्तिको उचित व्यावस्थापन तथा सदुपयोगका लागि यो पत्रिका एउटा असल गुरु बनोस्। पाठकहरूले आफ्ना सम्पूर्ण जिज्ञासा तथा कौतुहलता यस पत्रिकामार्फत समाधान भएको पाऊन् र पत्रिका पढ्दा उनीहरूको मन नै आनन्दित होस्। मानवीय संवेग तथा संवेदनालाई उचित ढंगले समेट्न सकेमा यो पत्रिकाले अपार सफलता पाउनेछ।

### प्रा.डा.अभिनारायण सुवेदी

*वरिष्ठ साहित्यकार*



युवाहरूको सेल्लुर इनर्जीलाई स्पेस दिने काम हालसम्मका मासिक पत्रिकाहरूले गर्न सकेको देखिँदैन तसर्थ राजनीतिक, सामाजिक र साहित्यिक विषयहरूमा भएको पुस्तान्तरलाई तन्नेरी डटकमले हटाउनेछ भन्ने आशा गर्छु। युवाहरुको सिर्जनशील कामहरूलाई प्रकाशमा ल्याई युवाहरूको केन्द्रीकृत पक्षलाई विषेश ध्यान देओस्, मेरो शुभकामना!

### सन्तोष शाह

*सम्पादक, टुडेज युथ एसिया तथा संयुक्त राष्ट्रसंघका युवा सल्लाहकार*



युवा बेरोजगारलाई विषेश ध्यान दिई आत्मनिर्माण गर्नतर्फ यस पत्रिकाले पहल गर्नुपर्छ। आजको शिक्षा प्रणालीले केवल प्रमाणपत्र दिन्छ, तर आत्मनिर्भरता दिँदैन। यो समस्याको निराकरणका लागि यो पत्रिकाले पथप्रदर्शन गर्नुपर्छ। युवा आवाज, समसामयिक मुद्दा मामिलामा युवाहरूको सक्रियतालाई यो पत्रिकाले स्थान दिनुपर्छ।

### धर्मेन्द्र झा

*सभापति, नेपाल पत्रकार महासंघ*



तन्नेरी डटकम निश्चितरूपमा समाजलाई विचार निर्देश गर्नुका साथै प्रतिभा, आधुनिक विज्ञानलगायत दृष्टिकोण विकसित गर्न सक्नेखालको हुनुपर्छ। केवल समाचार सम्प्रेषण गरिने चलनचल्तीको मान्यतालाई छाडेर व्यावहारिक बहस चलाउने खालको विषयलाई यो पत्रिकाले प्राथमिकता देओस्!

### अशेष मल्ल

*रंगकर्मी*

अहिलेका युवामा भविष्यप्रति अनिश्चितता र उदासीनता बढेको छ। उद्देश्यविहीन, गन्तव्य भुलेको जस्तो लाग्ने युवाहरूको यो विषम् परिस्थितिलाई सही मार्गदर्शन दिन सकोस्, तन्नेरी डटकमले। एउटा जीवन, एउटा लक्ष्य, एउटा बाटोको सहायताले मात्र गन्तव्यमा पुग्न सकिन्छ। यस सचेततालाई पत्रिकाले ध्यान दिनुपर्छ। हिँड्दा थकाइ लाग्छ, पत्रकारिताको बाटोमा त अरू कठिन हिँडाइ हिँड्नुपर्छ। तपाईंहरू निरन्तर हिँडिरहनूस्, नथाक्नूस्, मेरो शुभेक्षा छ।

### रोचक घिमिरे

*अध्यक्ष, नेपाल साहित्य पत्रकार संघ तथा सम्पादक/प्रकाशक, रचना सहित्यिक पत्रिका*



सामाजिक कला, संस्कृति, साहित्यजस्ता विविध विषयमा युवालाई लक्षित गरी राष्ट्रिय गतिविधिलाई अन्तर्राष्ट्रियस्तरमा पुऱ्याओस्, तन्नेरी डटकमले। अलमलिएका, बाटो बिराएका युवाजमातलाई सिर्जनशील बाटोमा ल्याई उनीहरूलाई यस पत्रिकाले अर्थपूर्ण तथा सार्थक दिशा प्रदान गरोस्।

### अमर राजकर्णिकार

*व्यवसायी*

अनावश्यक प्रशंसा र अतिरञ्जनायुक्त सञ्चार संस्कृतिलाई छाडेर सत्य, तथ्य समाचार सम्प्रेषण गर्नुका साथै युवाशक्तिको सही प्रयोगलाई बढावा दिँदै समाज रुपान्तरणको वातावरण निर्माणमा यस तन्नेरी डटकम पत्रिकाले रचनात्मक भूमिका निर्वाह गरोस्।

### रामबहादुर बस्नेत

*मनोविमर्शकर्ता*

पत्रकारिता राष्ट्रको चौथो अङ्ग हो। वास्तवमा यो त ज्योति हो जसले एउटा मानवदेखि लिएर सम्पूर्ण मानवजातिसम्मलाई प्रज्ज्वलित गर्न सक्छ। खोजपूर्ण र नयाँ सोचका साथ अगाडि बढेमा यो क्षेत्रमा असंख्य सम्भावनाहरू छन्। प्रतिस्पर्धा तथा कठिनाइ त हरेक क्षेत्रमा हुन्छ। तन्नेरी डटकम पत्रिकाले सम्पूर्ण मानवीय शैलीलाई समाहित गर्न सकोस्। चाहे अध्यात्म होस् या प्रविधि, आम मान्छेको सूचनाको आवश्यकतालाई यो पत्रिकाले पूर्ति गरी 'मल्टिडाइम्यान्सनल' पत्रिकाका रूपमा स्थापित हास्, सफलता सुनिश्चित छ।

-पिन

तन्नेरी डटकम प्रथम अंक प्रकाशन हुन लागेको सन्दर्भमा एउटा कुरो त राजनीतिक राखौं न भनेर केही साथीहरुले जोड गरेपछि गणतन्त्र नेपालका प्रथम राष्ट्रपति (माफ गर्नुहोला) शक्तिशाली प्रधानमन्त्रीको अन्तर्वार्ता लिने मनको लड्डु घिउसँग खाँदै टुकी बाली भोजनपछि घुप्लुक्क भएँछु ।

तरकारी बजारमा भेटिएका कालो सुट र टाइमा सजिएका प्रधानमन्त्रीका सम्भावित जुडुवाभाइसँगको मेरो स्वप्नान्तर्वार्ता –

**म**ः तपाईं त ठ्याक्कै प्रधानमन्त्रीजस्तै हुनुहुँदोरहेछ नि ?

**उहाँ**ः मने त्यो श्रीलंकाको प्रभाकरणलाई पनि प्रचण्डजस्तै भनेकै हुन् ।

**म**ः ठिकै छ, तपाईंको मने पनि प्रचण्डकै जस्तो रहेछ, तन्नेरीका लागि छोटो कुरा गरौं न है ?

**उहाँ**ः चण्ड र प्रचण्डमा मने भिन्नता नहुनुमा अचम्म मान्नुपर्ने कुरै छैन । यो सामन्तवादको पराजयपश्चात् बूढापाकाभन्दा तन्नेरीका लागि कुरा गर्नु हाम्रो पार्टीको पहिल्यैदेखिको नीति हो । तर, अहिले सन्दर्भ छ, व्यस्तताको त्यसैले तीन प्रश्नमात्र सोध्नूस् ।

**म**ः यो अहिले भइरहेको पशुपतिनाथको हडतालले के गिनिज बुक अफ वर्ल्ड रेकर्डमा स्थान पाउला त ?

**उहाँ**ः दुई सय ३८ वर्षदेखि जो सामन्तवादको पृष्ठपोषणका लागि जनकल्याण गर्दै आएको थियो र अझैसम्म पनि लोकतान्त्रीकरण नभई १० वर्षे क्रान्तिकारी जनआन्दोलनको मर्मलाई नबुझेको सन्दर्भ जो थियो त्यसमा हामीले विचार गर्नैपर्थ्यो भन्ने हाम्रो पार्टीको पनि धारणा रहेको हुँदा त्यहाँ हुने पूजाआजा क्रान्तिकारी जनवादी विधिबाट गरिनुपर्छ भन्ने धारणाले क्रान्तिकारी भट्टको खोजी गर्न हाम्रो पार्टीका भातृसंगठनका भाइहरु भारतसम्म पनि गएका हुन् । तर, पार्टीको सदस्यता नलिएकालाई क्रान्तिकारी भन्ने आधार पनि भएन । यी सबै कुराको बावजुद पनि हामीले भट्ट नियुक्ति गरेको अवस्थामा मन्दिरमा पूजा हुन नसक्नुले सामन्तवादको समूल नष्ट भएको पुष्टि गर्छ । किन भनेर नसोध्नुहोला उनले हामी सबैको कल्याण नगरे पनि उनको कल्याण हामीले गर्नुपर्ने अवस्था निश्चितरुपमा आउँदैन थियो ।

**म**ः यो लोडसेडिङको त अन्योल भयो नि, कहिले १० कहिले १२ घण्टा ?

**उहाँ**ः यसमा मने जो अन्योल छ, यो हामीले स्पष्ट पारिसकेका छौं । जुनसुकै कुरा पनि सकेसम्म जनतालाई बढी दिने हाम्रो लक्ष्य रहे पनि हामीले स्पष्टरुपमा दैनिक २४ घण्टाभन्दा बढी नगर्ने प्रस्ट पारेका छौं ।

**म**ः तपाईंहरुले त २०६६ चैत्र महिना नै हटाउने क्रान्तिकारी निर्णय गर्नुभएछ नि ?

**उहाँ**ः सामन्तवादले अहिले पनि टाउको उठाइरहेको सन्दर्भमा हामीले २०६४ चैत्र २८ गते भएको संविधानसभाको निर्वाचनमा ऐतिहासिक विजय हासिल गरेपछि त्यसको दुई वर्षमा संविधान लेखिसक्न नदिएर २०६६ साल चैत्रमा हाम्रो सरकार ढाल्न सबै यथास्थितिवादीहरु, सामन्ति र विदेशी दलालहरु लागिपरिरहेको अवस्थामा हामीले त्यो महिना नै हटाइदिने यस्तो क्रान्तिकारी निर्णय गरेका हौं ।

म झल्याँस्स बिउँझें । ●

hgcf{jf]

– दिवेश्वर गुरुङ



■ प्रा.डा. डीपी भण्डारी



# एक गोठालोको आत्मकथा

*'विचित्रको, बुझिनसक्नु यो कस्तो विडम्वना ? जहाँ मान्छे इतिहासको निर्माता हुनुपर्थ्यो, त्यहाँ इतिहासको गुलाम हुनुमा सीमित हुन पुग्यो ।'*

**–अल्वेयर कामु**

मेरो निजी जीवनको कथासित कामुको बोलीको कति सान्दर्भिकता, कति अर्थवत्ता छ, मलाई थाहा छैन । सायद सामान्य तार्किक विश्लेषणमा छैन । मैले पनि यो वाणीको पूरा अर्थ बुझेर सिरानी-सूत्रका रूपमा उद्धृत गरेको होइन । अर्ध उन्मिलित नयनको, अर्ध ध्यान, अर्ध मानसिक चपलताको दशामा चुनेको वाणी हो । सबै कथ्य र तथ्यबारे सुनिश्चित भएर लेख्छु भन्नेहरू आफ्नो कथा अक्सर लेख्न असमर्थ हुन्छन्, लेखिहाल्यो भने पनि त्यहाँ इतिवृत्तात्मक शुष्कताको प्रधानता हुन्छ । मान्छेको जीवन तथ्यांकमात्र होइन । त्योभन्दा धेरै परको प्रवाह पनि हो ।

जो हामी देखिन्छौं त्यो जो हामी छौं, हुन्छौं, जो हामी देखिँदैनौंको अनुपातमा दयनीय रूपले तुच्छ छ । सबै नभनौं, लगभग पन्चानवे प्रतिशत आत्मकथाहरू हुनुभन्दा बढी देखिनुको सेरोफेरोमा घुमिरहेका हुन्छन् । मेरा कथाको सार र शैलीमा पनि कुनै अपवादबोधक वैशेषता आउने छैन ।

म सुनिश्चित भएर भन्न सक्छु कि, मेरो आत्मकथा मेरो वर्तमानको बोझिल तथ्यबाट केही समयका लागि भावनात्मक अथवा बौद्धिक मुक्ति पाउने प्रयास मात्र हुनेछ । रङ्गिन अतीतको एक स्मृतिरमण, मेरो आफैंसितको एक विरेचनात्मक आत्मसंवाद । मेरो दृष्टिमा तुच्छ पट्यारलाग्दो तथ्याङ्कलाई एक सीमापछि अनि क्रमशः गरेर हृदय, मस्तिष्क र आत्माको उन्मुक्त लोकमा आधारित आत्मकथाहरू धेरै रोचक र स्थायी कथानकको प्रभुता बोकेका हुन्छन् ।

गेटे, रसल, डब्लू.बी. यिट्स, जवाहरलाल नेहरू आदि धेरै महापुरुषले आफ्नो जीवनको स्थिरता र गतिशिलता, प्रकाश र तिमिर, उतारचढाव बारे आफ्नै विशिष्ट शैलीमा शाब्दिक स्मरण गरे । तथ्य, सत्य प्रस्तुतिको दृष्टिले हेर्ने हो भने महात्मागान्धी र ब्रट्रन्ड रसलका आत्मकथाहरू अतुलनीय छन् । मानवजीवनमा यौन र यौन-व्यवहार केन्द्रीय भूमिका लिएर आएको हुन्छ ।

मूलाधारीय सत्यबारे गान्धी र रसल जति ट्रान्स्परेन्ट, स्पष्ट र साहसी छन् आफ्ना अभिव्यक्तिहरूमा त्यति अरू कुनै आत्मकथा लेखक होला जस्तो लाग्दैन । गान्धीको कथामा इमान्दारी हुनुमा कुनै आश्चर्यको कुरा होइन किनकि उहाँको व्यक्तित्वको उचाइले जे भन्न पनि स्वीकृति दिन्छ । ब्रट्रन्ड रसल त आफ्नो जीवनको अन्तिम दिनहरूसम्म पनि यौन चेतना र कर्मबाट मुक्त हुन सकेका थिएनन् र त्यो उनको कमजोरी, लज्जा वा वर्जनाको विषय नभएर उनको दर्शनको, मूल्यदृष्टिको र जीवनको स्वीकृतिको अकाट्य लक्षण थियो ।

किशोरावस्थामा वा यौवनमा जेजति यौन, यौन तृष्णा र अनुशासनहीन यौनकर्मको बयान गान्धीजीले गर्नु भए पनि उहाँले पछि कालखण्डको हिसाबले उग्र यौवनमा नै ब्रह्मचर्यमाथि जोड दिन थाल्नु भयो र पैंतीस वर्षको उमेरदेखि नै पत्नीसित स्वीकृति लिएर अखण्ड ब्रह्मचार्य ब्रत लिनुभयो । गान्धीजीको जीवनमा सेक्स र सेक्स चेतनाको महत्त्वपूर्ण स्थान रह्यो ।

गेटे, रसल, पिकासो आदि प्रतिभाहरूको जीवनको अन्तिम दिनसम्म पनि यौनतृष्णा, यौनाभूति, भोग, यौनानन्द अथवा त्यसबाट पैदा हुने भ्रान्तिको उल्लेखनीय भूमिका रह्यो । दुवैथरि आ-आफ्नो आस्था वा जीवन दर्शन अनुकूल नै सिर्जनात्मक जीवन बाँचेर गए । जो गान्धीजीको मूल्य पद्दतिमा अनुशासनहीनता, एक दोष, एक पाप थियो । त्यो सुकरात, प्लेटो, हिन्दूधर्मशास्त्रभित्रका केही पौराणिक ऋषि र विश्वइतिहासका केही महान् साधक र प्रतिभाहरूका लागि सावधिक सिर्जनसिर्जनात्मक कल्प विकल्प हुन पुग्यो ।

तिनीहरूको शीलताको एक प्रकारको अतिरेक, एवन्डेन्स थियो । एडल्फ हिटलरको आत्मकथा मिकाम्फ पढ्दा केही विस्मयका क्षणहरू आउँछन् त्यति ठूलो विध्वंशकारी प्रतिभा, डाइवोलिक जिनियसको एकदमै निजी व्यक्तिगत खानपिनसम्बन्धी आचार अत्यन्त नै संयमित थियो ।

हिन्दू धर्मले निर्धारित गरेको आचारसंहिताको आधारमा मात्र हिटलरको मूल्यांकन गर्ने हो भने उसलाई महात्मा हिटलर भनिदिए हुन्छ । हिंसा त हाम्रो पुराण-इतिहासमा ठूलाठूला ऋषिहरूले पनि नगरेका होइनन् । धर्मशासुले बर्जित गरेका कुनै तामसिक आहार हिटलरले आफ्नो जीवनमा कहिले पनि लिएनन् : मांस, मदिरा, चिया, चुरोट, खैनी आदि अभक्ष र अभेय पदार्थहरूबाट आफूलाई अत्यन्त निष्ठापूर्वक अलग्गै राख्यो । यौनक्रीडामा पनि अत्यन्त संयमित-लगभग ब्रह्मचारी । एभा ब्राउनसितको प्रणय काण्डमा असंयमित कामुकता कतै भेटिँदैन । तर, दुवैले एकैसाथ आत्महत्या भने गरेका हुन् । मनसविद्हरूको मत छ कि हिटलर खानपिन भौतिकस्तरको प्रेमको अर्थमा केही कम कट्टर र कम आत्म अनुशासित भैदिएको भए संसारको त्यति धेरै विनाश हुने थिएन । यो भनाइ सजिलो ढंगले, सामान्यखालको कल्पनाशीलताको बलमा मात्र बुझ्न सकिने भनाइ होइन । तर, मनसविद्हरूको यो विरोधाभाषपूर्ण वक्तव्य एकदम सही वक्तव्य हो ।

मानवका केही बर्जित बानीहरू पनि तामसिक, निषेधात्मक वृत्ति र प्रवृत्तिहरूलाई केही निकास दिन्छन् । कुनै बेला, कुनै सन्दर्भसित सम्बद्ध कथित आत्मानुशासित आउने दम्भ घातक हुन सक्छ । कुनै ऋषि र तपस्वीहरूका अहंकारपूर्ण उद्घोष र चुनौती बारेमा पढिन्छ, सुनिन्छ । हिटलर त निम्न धरातलको निवासी । चोखो

भोजन र कामका समय त उसको एक सनकमात्र थियो, सायद स्वघोषित आर्य चेतनाको अनुसंग ।

हामीले भोगिरहेको सामान्य जीवनमा पनि अक्सर भेटिन्छन् काम, क्रोध, लोभ, आसक्ति र घृणाले परिपूर्ण कथित पण्डित, महात्मा, साधुसन्तहरू । पाखण्डताका जागृत नमुनाहरू, प्रदर्शनमा कुशल, सार र सत्यमा दुर्वल । वहुसंख्या यस्तैको छ, धेरै नै अल्पसंख्या असली सन्तहरूको छ यो धर्तीमा ।

तर, हिटलरमा पाखण्डता पक्कै थिएन । दानवता भने भरपूर थियो । म सबैलाई भन्दिन, तर केही चोखाहरूसित होसियार भैरहनुपर्ने हुन्छ स्रष्टाको यो रहस्य सृष्टिभित्र । साक्षर लोकमानसमा 'आत्मकथा'ले सम्प्रेषण गर्ने अर्थ र अभिप्राय दुवै एकसाथ हुन्छ कुनै महत्त्वपूर्ण नारी वा पुरुषको आत्मरचित, आफैंले लेखेको जीवन-वृतान्त । त्यस्तो मान्छेको जीवनमा धेरै ठूला उतारचढाव, उल्लेखनीय कृति-गाथा, जनहित र मानव कल्याणमा उसले पुऱ्याएको योगदान, अथवा आफैंले चुनेको क्षेत्र र पेसामा गरेको असामान्य योगदान भएको, गरेको हुनुपर्छ भन्ने धारणा मौलिक रूपले जमेको हुन्छ विशाल भीडको मनभित्र ।

आत्मकथा एक नयाँ लेखन विधा या लेखनक्षेत्रका रूपमा आइसकेको तथ्यसित धेरै कम शिक्षितहरू परिचित छन् । म आफैंले भने आफ्नो कथाको शीर्षक बीस वर्षपहिले अंग्रेजीमा चुनेको थिएँ । शीर्षक थियो, हिटलर एन्ड बटरफ्लाइज् : एन अटोबायोग्राफी अफ अ हिमालयन सेफर्ड (हिटलर र पुतलीहरू : एक पर्वतीय गोठालाको आत्मकथा) शीर्षक गम्भीर भएको हुनाले म लेखन स्थगित गर्दै गएँ । अर्को शब्दमा भन्ने हो भने, मेरो नैसर्गिक आलस्य मूल कारण बन्यो लेखनकर्मलाई अनिश्चित भविष्यतिर धकेल्नुमा ।

मित्र, प्रेमीप्रेमिकाहरूको दबाब बढ्दै गयो ममाथि कि, मैले एकदुई मोनोलिथिक, सिङ्गै मौलिक किताबहरू चाँडै निकाल्नुपऱ्यो । भाषा जे भए पनि हुन्छ, नेपाली, अंग्रेजी, हिन्दी । जोकोही मित्रहरू, सहृदयी र हितैषीहरू आजभन्दा पैतीस-चालीस वर्ष पहिलेदेखि नै जोडदार सल्लाह दिइरहेका थिए, अनुरोध गरिरहे । म केही हीनताबोध, केही संकोच, केही अनुवंशीय जैविक आलस्यको संयुक्त निषेधात्मक प्रभावमुनि दबिरहें ।

नेपाली सिर्जना र वाङ्मयको गुण धर्म र व्यापकतमा मात्र सीमित हुने हो भने हीनताबोध आउने त कुरै भएन, बरु केही नलेखे पनि हीनताबोधको विपरीत भाव पैदा हुन्थ्यो । तर चञ्चल मन विदेशतिर दौडन थाल्थ्यो, अझै दौडिरहन्छ । सापेक्षवादको सिद्धान्तका आधारमा आफैंलाई निरीक्षण गर्दा, आफ्नो सही वा स्व-कल्पित सत्यबाट उत्साहित नभएर निरुत्साहित भैरहें, अझै पनि भैरहेछु । तिक्ष्ण संवेदनशीलताले कुनै स्थिति र परिवेशभित्र विचार गर्ने हो भने, लाभभन्दा बढी हानी ल्याउँदो रहेछ ।



नेपालका केही स्वनामधन्य मूढहरूको इर्ष्या लागिरहन्छ, जो आफैंलाई ठूलो स्रस्टा, महान् साहित्यकार भन्ने उद्योगबाट कहिले पनि थकानको अनुभव गर्दैनन् र मस्तसित ठूलो आवाज निकालेर भोजन चपाउँछन्, ठूलो आवाज निकालेर सुत्छन् । र सुकलाबाट जागा भैसकेपछि आफ्नो बायोडाटा र कृतिहरूको सूचि र ती कृतिहरूमाथि नेपालका धुरन्धर विद्वान्, विदुषीहरूले व्यक्त गरका रोचक स्वास्थबर्धक अभिमतहरूको सँगालो बोक्दै लाग्छन् उपयुक्त ठाउँतिर ।

*(प्रा.डा. डीपी भण्डारीको आत्मकथा आगामी अंकमा क्रमशः प्रकाशन गरिनेछ । -सं)*

## uhn

### राजेन्द्र थापा



देश चिन्न मन भए, ज्यामीको सुख्खा रोटी पढ्नू
आफू चिन्न आफ्नै मुटु, कमसेकम एकचोटि पढ्नू

काठमाडौंले देश पढ्यो, देशले काठमाडौं पढ्यो
साँच्चिकै देश पढ्न, कर्णाली र डोटी पढ्नू

यसले उसलाई पढ्नू, उसले यसलाई पढ्नू
धोती पढ्नेले टोपी पढ्नू, टोपी पढ्नेले धोती पढ्नू

जति पढे नि ऐनामा त, आफैंलाई मात्र पढ्ने हो
रातको अँध्यारो मेट्न, बिहानको ज्योति पढ्नू ।

●

### जित कार्की



जब प्रीत आग्रहमा परें, म यसै मरें म उसै मरें
र त दुःखको दहमा झरें, म यसै मरें म उसै मरें ।

कति सम्झना कति कल्पना सब प्रेमका गहना भनी
जति जे दियो गहमा भरें, म यसै मरें म उसै मरें ।

"मनमा बसाउँछु भन्दथ्यो मुटुमा सजाउँछु भन्दथ्यो
किन बाहिरी तहमा सरें, म यसै मरें म उसै मरें ।

अब भो भयो तँ नजा चरी रुनु नै परेपछि धर्धरी
म विछोडकै बहमा मरें, म यसै मरें म उसै मरें ।

●

### जनक पौड्याल



मटोमै फुल्छ माटोमै फल्छ मान्छेको जिन्दगी
यै माटो भुले कसरी चल्छ ? मान्छेको जिन्दगी

जति नै माथि पुगे 'नि आखिर धर्ती हो आधार
माटोमै हिँड्न नजाने ढल्छ मान्छेको जिन्दगी

माटो हो प्राण, माटो हो मुटु, माटै हो संसार
माटोमै जन्मी माटोमै गल्छ मान्छेको जिन्दगी

माटोको पूजा गरेर बाँचे, समाज सामुन्ने
आशाको दियो बनेर बल्छ मान्छेको जिन्दगी ।

●



# खण्डकाव्यकार देवकोटा र यिनका] 'सूजामाता' खण्डकाव्य

## खण्डकाव्यकार देवकोटा

महाकवि लक्ष्मीप्रसाद देवकोटा (वि.सं.१९६६-२०१६) नेपाली साहित्यका सर्वोच्च प्रतिभा हुन् । पूर्ववर्ती परिष्कारवादी कविहरूभन्दा भिन्न रहेर नेपाली कवितालाई नयाँ दिशातर्फ डोऱ्याउने कवि देवकोटाले नेपाली साहित्यमा स्वच्छन्दतावादको प्रवर्तन गरे । सरस्वतीका वरदपुत्र, प्रतिभाका कुवेर तथा नेपाली साहित्यका पूर्णचन्द्र देवकोटा नेपाली भाषामा लेख्ने आशुकविहरूमध्ये सबभन्दा द्रुततर लेखन गर्ने आशुकवि हुन् । उनले आफ्नो सक्रिय पच्चीस वर्ष (वि.सं.१९९१-२०१६) को कवितायात्रामा सयौं पुटकर कविता, दुई दर्जनको हाराहारीमा खण्डकाव्य र लगभग आधा दर्जन महाकाव्यहरू लेखेको देखिन्छ । उनले कविताको लघु, मध्य र बृहत् तीनै रूपमा आफ्नो दक्षता देखाए भने उनी गुण तथा परिमाणका दृष्टिले पनि सर्वाधिक उर्वर नेपाली कविका रूपमा नेपाली काव्य इतिहासमा देखा परेका छन् । फुटकर कविता, खण्डकाव्य र महाकाव्य गरी कविताका तीनवटै फाँटमा उनको स्थान सर्वोपरि रहेको छ ।

अङ्ग्रेजी साहित्यका स्वच्छन्दतावादी कविहरू वर्डस्वर्थ, सेली, किट्स आदिबाट प्रभावित भएर देवकोटाले नेपाली साहित्यमा स्वच्छन्दतावादी धारको आमन्त्रण गरे । शास्त्रीयतावादी कट्टरताका विरुद्ध 'मुनामदन' (१९९२) खण्डकाव्यको प्रकाशन गरेका देवकोटा तर्कलाई भन्दा अनुभूतिलाई बढी जोड दिन्छन् र मस्तिष्कलाई भन्दा हृदयलाई आफ्ना खण्डकाव्यमा उतार्छन् । स्वच्छन्दतावादी कविहरू सृजनाप्रवाहमा नियम, अनुशासन र द्वन्द्वको बन्धन स्विकार्दैनन् । देवकोटामा पनि अत्यन्त संवेदनशील र कल्पनाशील प्रतिभा एवम् स्वतःस्फूर्त प्रभावको निरन्तरताजस्ता प्रवृत्तिहरू देखा पर्दछन् । स्वच्छन्दतावादका अतिरिक्त यिनका खण्डकाव्यमा प्रगतिवादी चेतना, भातृत्व, मानवतावाद, स्वतन्त्रता, समानता, करुणा आदिको प्रस्तुति पाइन्छ । मूलतः स्वच्छन्दतावादी प्रवृत्ति देवकोटाको केन्द्रीय प्रवृत्ति हो ।

देवकोटा प्रकृतिका महान् गायक हुन् । यिनले तन्मयभन्दा मन्मय प्रकृतिको चित्रण आफ्ना खण्डकाव्यहरूमा गरेका छन् । किताबका पोथ्रा ज्ञान पढ्नुभन्दा प्रकृति पढ, फूल पढ, प्रकृतिमा विशाल ज्ञानभण्डार छ भन्ने यिनको मान्यता रहेको छ । प्रकृतिको चित्रणलाई देवकोटाले मानवीकरण गरेका छन् । रुसोको प्रकृतितर्फ फर्क भन्ने मान्यतालाई आत्मसात् गर्दै खण्डकाव्यमार्फत यसको प्रभाव ग्रहण गर्न पुग्छन् । मानिसको सुखमा प्रकृति प्रशन्न देखिन्छे, मानिसको दुःखमा वेदनाले ग्रस्त हुन्छे । देवकोटाका खण्डकाव्यमा नेपालका गाउँठाउँ, नदीनाला, हिमाल, पहाड आदि नेपाली राष्ट्रिय प्रकृति सजीव रूपमा आएका हुन्छन् ।

मानवतावादका पुजारी देवकोटाका खण्डकाव्यमा मानवतावादी स्वर गुन्जिएको

**देवकोटा प्रकृतिका महान् गायक हुन् । यिनले तन्मयभन्दा मन्मय प्रकृतिको चित्रण आफ्ना खण्डकाव्यहरूमा गरेका छन् । किताबका पोथ्रा ज्ञान पढ्नुभन्दा प्रकृति पढ, फूल पढ, प्रकृतिमा विशाल ज्ञानभण्डार छ भन्ने यिनको मान्यता रहेको छ । प्रकृतिको चित्रणलाई देवकोटाले मानवीकरण गरेका छन्**

पाइन्छ । मानव शरीर ईश्वर विराजमान हुने मन्दिर हो, मानव मस्तिष्कमा ईश्वर रहने हुँदा मानिसको पूजा गर्नुपर्छ भन्ने देवकोटा आफ्नो मानवतावादी दृष्टिकोण खण्डकाव्यमा व्यक्त गर्छन् । मुनामदन, कुन्जिनी, मायाविनी सर्सी लगायतका खण्डकाव्यहरूमा यिनको मानवतावादी स्वर गुन्जिएको पाइन्छ । यिनका विचारमा मानव सेवा सबैभन्दा ठूलो धर्म हो । सेवामुखी धर्म पालनद्वारा ईश्वर प्राप्त हुन्छ र यसैबाट नै मानव जीवन सार्थक पनि बन्छ भन्ने देवकोटाको धारणा छ ।

आशुकवित्व देवकोटाको काव्ययात्राको सुरुदेखि अन्त्यसम्म देखापरेको प्रवृत्ति हो । एकै रातमा, एकदिनमा र एकै बसाइमा समेत काव्यको सृजना गर्न सक्ने क्षमता भएका देवकोटाको आशुकवित्वलाई वर्षा लेखन, स्वतःस्फुर्त निर्झर लेखन, प्रवाह लेखन, विजुली लेखन भन्न सकिन्छ । यिनमा कविता चढेका बेला एकसुरमा पहाडी बेगशाली नदी हामफाल्न हड्बडाएझैं कविता गड्गडाउँछन् । यो गड्गडाहट देवकोटाका काव्य यात्रामा शक्ति र सीमा दुवै बनेका छन् ।

## देवकोटाको खण्डकाव्ययात्रा

देवकोटाको खण्डकाव्यकारितालाई दुई चरणमा विभाजन गरेर अध्ययन गर्न सकिन्छ : बनारस प्रवासपूर्व काल (१९९२-२००३) र बनारस प्रवास काल (२००४-०६) । बनारस प्रवासपूर्व अर्थात देवकोटाको खण्डकाव्यकारिताको पहिलो चरण अत्यन्त उर्वर देखिन्छ । यस चरणमा यिनले लोककथा, लोकगाथा, शास्त्रीय वा पौराणिक काव्यहरूलाई विषय बनाएर खण्डकाव्यको रचना गरेको पाइन्छ । लोकप्रचलनमा रहेका विषयवस्तु टिपेर लोक तथा शास्त्रीय छन्दमा काव्यहरूको रचना गरेका भए पनि देवकोटाका लोकलयमा लेखिएका खण्डकाव्यहरू बढी सशक्त बने । देवकोटाको खण्डकाव्ययात्रामा विषयवस्तुका हिसाबले लोकप्रसिद्ध विषयवस्तु प्रमुख प्रवृत्तिका रूपमा आएको छ । यस चरणमा देवकोटाको कवित्व विस्फोटक पाराले प्रस्तुत भएको छ । स्वच्छन्दतावादी-मानवतावादी मूल स्वरलाई आत्मसात् गर्दै यिनले काव्य रचना गरे । यस चरणको र देवकोटाको समग्र काव्ययात्राको महत्त्वपूर्ण उपलब्धिका रूपमा 'मुनामदन' खण्डकाव्यलाई लिन सकिन्छ । यसमा नेपाली माटोप्रतिको प्रेम, नेपाली सभ्यता र संस्कृतिको यथार्थ चित्र उतार्नुका साथै प्रकृतिसँग निकट साइनो गाँस्ने नेपाली जीवन र मानवताको उज्यालो तस्वीर खिचिएको छ ।

देवकोटाको काव्ययात्रामा लोकलयको प्रयोग एउटा महत्त्वपूर्ण प्रवृत्तिको रूपमा रहेको छ । त्यसो त सिङ्गो नेपाली कविता परम्परामा देवकोटा लयका दृष्टिले बहुमुखी देखिएका छन् । बार्णिक छन्दको प्रयोगमा विविधता तथा प्रयोगशीलता रहेपनि देवकोटा सहज सङ्गीतले समृद्ध छन् । मात्रा छन्दमा समेत कुशल भाव सम्प्रेषण गर्ने देवकोटाले लोकलयलाई काव्यात्मक उचाइ प्रदान गरेका छन् । समयुगीन जीवनको व्याख्या गर्न तथा समकालीन युगबोध गराउन लोकप्रसिद्ध विषयलाई सुन्दर लयमा उन्ने देवकोटाका काव्यहरू गीतिकाव्य तथा प्रगीतात्मक काव्य बनेका छन् । देवकोटाको खण्डकाव्ययात्राको सर्वोत्कृष्ट काव्य 'मुनामदन' यसै चरणमा रचिएको हो । त्यस्तै यस चरणमा राजकुमार प्रभाकर, सीता हरण, सुषमा, म्हेन्दु, कुन्जिनी, लुनी, दुष्यन्त शकुन्तला भेट जस्ता

खण्डकाव्यहरू रचिएका छन् ।

देवकोटाको खण्डकाव्य रचनाको दोस्रो चरण अर्थात बनारस प्रवास काल (२००४-०६) पनि अत्यन्त उर्वर रहेको पाइन्छ । यस चरणमा यिनले बसन्ती, मैना, सृजामाता, मायाविनी सर्सी, नेपाली मेघदूत, झञ्झा वर्णन, आनन्दशतक, नवरस, वैराग्य लशरी, कटक, आँसु, पहाडी पुकार, नयाँ सत्यकली सम्वाद जस्ता काव्यहरूको रचना गरे । पूर्वीय र पाश्चात्य दुवैतर्फका लोकप्रसिद्ध विषयवस्तु यस चरणमा पनि यिनले छनोट गरेका छन् । यस चरणमा पनि लोकलयलाई बढी उपयोग गरेका छन् । भने पूर्ववर्ती काव्यहरूमा भन्दा फरक यस चरणका काव्यमा मात्रिक छन्द र मुक्तलय (गद्य) को समेत प्रयोग गरेका छन् ।

यिनले वसन्ती र मैनाजस्ता काव्यमा लोकप्रसिद्ध विषय तथा कटकमा इतिहास प्रसिद्ध विषय अङ्गालेका छन् । पश्चिमी जगत्का पुराकथालाई आत्मसात् गरी सृजामाता र मायाविनी सर्सी लेखेका छन् । नवरस जस्तो शास्त्र प्रसिद्ध विषयमा लेखिएको काव्यमा भने आख्यानविहीन भावप्रवाह छ ।

देवकोटाको खण्डकाव्ययात्राको दोस्रो चरण बहुआयामिक रहेको छ । उनले क्रन्ति चेतना, मानवतावादको पक्षपोषण, सामाजिक समकालीन असङ्गतिप्रति व्यङ्ग्य प्रस्तुत गरेका छन् । अघिल्लो चरणको तुलनामा यस चरणका खण्डकाव्यहरू भाव, आख्यान तथा कवित्वका दृष्टिले पूर्ण रूपमा सन्तुलित भने बन्न सकेका छैनन् । उनकै आत्मस्वीकृति अनुसार 'पहराबाट छहरा छुटेझैँ' प्रवाहित काव्यधारामा सफा पानी मात्र नभएर कसरमसरहरू पनि बगेका छन् । काव्यात्मक अनुशासनका तटबाँधभित्र नखुम्चिई सहज रूपमा हार्दिक ढङ्गले बग्न रुचाउने देवकोटा बौद्धिकताको बिर्को लगाएर दार्शनिक चेतले काव्यलाई थिलथिलो पार्नुभन्दा रमरम बौद्धिकता रुचाउँछन् ।

देवकोटाले बनारस प्रवासकालमा रचिएका खण्डकाव्यहरूमा प्रणय, वीरता, प्रकृति र मानव बीचको एकाकारिता, क्रन्तिकालीन परिवेश, मनोवैज्ञानिक सन्दर्भ, मानवजीयताको यशोगान जस्ता कुरा समेटेका छन् । प्रकृतिका विभिन्न पक्षको चित्रण गरिएको झञ्झा वर्णन उत्कृष्ट प्रकृति काव्य हो । आनन्दशतक देवकोटाको अर्को महत्त्वपूर्ण काव्य हो । २००६ पछि देवकोटाले नयाँ खण्डकाव्यको रचना नगरे पनि 'मुनामदन'लाई परिष्कार गर्ने काम गरे परिष्कृत मुनामदन (२०१५) नेपाली साहित्यकै सर्वश्रेष्ठ प्राप्ति बनेको छ ।

देवकोटाले आफ्ना खण्डकाव्यमा नवरसको भावलाई काव्यात्मक प्रस्तुति दिएका छन् । रस परिपाकमा पुऱ्याउनुको साटो रसभावको काव्यात्मक प्रस्तुति रुचाउने यिनी अङ्गी र अङ्ग रसलाई अस्वीकार गर्दै विविध रसको प्रयोग एकसाथ गरी त्यसलाई मौलिक शैलीमा विभिन्न भावहरूको समन्वय गरी प्रस्तुत गरेका छन् । स्वच्छन्दतावादी अजस्र कवित्व प्रवाहमा चेपिएर यिनका खण्डकाव्यका संरचना भने कमजोर बनेका छन् । परिष्कार र परिमार्जन नरुचाउने देवकोटा सहज र स्वतःस्फुर्त अभिव्यक्ति प्रयोग गर्छन् । देवकोटा स्वच्छन्दतावादी कविका नाताले सहज प्राकृत भाषाशैली रुचाउने कवि हुन् । यिनी शैलीगत अनुशासन संयम राखी परिमार्जित अभिव्यक्ति दिई कवित्वको द्रुत वेगमा अवरोध पुऱ्याउन चाहँदैनन् । यिनलाई शैली संरचनाको शास्त्रीय मान्यताभन्दा भावको प्रवल उर्जाका शक्तिमा बढी विश्वास छ । देवकोटा स्वयम्ले आफूलाई शैलीका दृष्टिले पहाडी स्वच्छन्द नदी र नालाहरूसँग दाँजेका छन् जसले उनको स्वभावको तस्वीर उतार्छ ।

यिनी अलङ्कार र बिम्ब प्रयोगमा पनि सचेत भेटिँदैनन् । द्रुत कवित्व प्रवाहमा जस्ता भावबिम्ब तथा अलङ्कार आउँछन् त्यसैमा रमाउने देवकोटा सचेत रूपमा अलङ्कार र बिम्ब विन्यास गर्दैनन् । यिनी भावको सहज प्रवाहमा विश्वास गर्छन् । त्यसैले यिनी परिष्कारवादी कविहरू झैं अभिव्यक्तिलाई सिँगार्ने कुरामा विश्वास गर्दैनन् । यही स्वभावका कारण देवकोटाका काव्यहरूमा सङ्गीत चेतनामा, भाषशैलीमा र बिम्बविधानमा पनि अवचेतन प्रतिभा प्रवाहको ज्वार भेटिन्छ । स्वच्छन्दतावादी कविका नाताले यिनी प्रकृति र जीवनका बीच तादात्म्यको अनुभव गर्छन् । दिव्यचेतना, मानवता र प्रकृतिचेतका समाख्यानमा देवकोटाको स्वच्छन्दतावादी वैचारिक धरातल प्रकट हुन्छ जसलाई उनी आफ्नै परिवेशको सन्दर्भमा व्यक्त गर्छन् । यिनले प्रारम्भमा राष्ट्रवादी स्वर घन्काएका भए पनि पछि क्रमशः युगीन अन्तर्राष्ट्रिय परिप्रेक्ष्यप्रति पनि सचेत हुँदै आएका देखिन्छन् । आख्यान, पात्र, विषय तथा सन्दर्भ अनुकूल भाषाको प्रयोग गर्ने देवकोटाले सरल र जटिल भाषाको प्रयोग गरेका छन् । 'मुनामदन' मा सरल भाषाको प्रयोग भएको छ भने 'मायाविनी सर्सी' जटिल भाषाको प्रयोग पाइन्छ । देवकोटा पूववर्ती खण्डकाव्यकारले नभेट्ने गरी काव्यका उच्च शिखर आरोहण गर्न सफल भ एभने उत्तरवर्ती सहित्यकारहरूले यिनको उचाइ भेट्न सकेका छैनन् । यिनी समग्र नेपाली खण्डकाव्य परम्पराकै सर्वोच्च प्रतिभा हुन् ।

१९९२ बाट प्रारम्भ भएको देवकोटाको खण्डकाव्य लेखन २००६ सम्म अत्यन्त क्रियाशील रहेर अन्त्य भयो । जम्मा १५ वर्षको खण्डकाव्य यात्राको पूर्वार्द्ध र उत्तरार्द्ध लेखन प्रवृत्तिका दृष्टिले भिन्न रह्यो । २००४ पूर्वका यिनका काव्यहरू स्वच्छन्दतावादी- मानवतावादी मूल स्वरका साथ लेखिए भने त्यसपछिका काव्यमा स्वच्छन्दतावादी

## वनकविता

**-सुको साइबर**



पढ्दापढ्दै
बिग्रन थाल्छन्
भत्कन थाल्छन्
एकादेशका
हरिया अक्षरहरू
हल्लँदै हावामा
अप्सराहरूझैँ
धाँजा फाटेका
खेतका गह्रा-गह्रामा भरिँदै
किसानको परेलीमुनि
बास बस्ने
पवित्र पानीझैँ
मोडिँदै
पूर्व-पश्चिम
उत्तर-दक्षिण
शब्दका खालि पैतालाबाट
टिल्पिलाउँदै झरेका
रगतका थोपाहरू
पढ्दापढ्दै
चियाएर
अक्षरका चेपबाट
आँखा झिम्क्याउने
सुन्दरीहरूझैँ
कतै
नमिलेर सन्दर्भ
आँखामा मन दल्छन्
कतै
नथेगेर अर्थ
आँखामा मुटु फोस्छन्
कतै
नथामेर भार
आँखामा आँखा खोज्छन्
ढल्छन्-छट्पटाउँछन्...
छन् र त ढल्छन्
छन् र त चिहाउँछन्
छन् र त झिम्क्याउँछन् ।
पढ्दापढ्दै
अर्थहरू
तीखा काँडा
र, चुच्चा कङ्क्रिट कुल्चँदै
आत्महत्याको पासो नाघेरै भए पनि
पुग्न खोज्छन्
अनर्थ हुँदै नयाँ अर्थसम्म ।
कोतरिँदै
काँडाका झ्याङहरूमा
फूलका पत्रहरूमा
कङ्क्रिट-फूल हुँदै
फूल-कङ्क्रिट हुँदै
कङ्क्रिट फूल हुन...
फूल कङ्क्रिट हुन...
पढ्दापढ्दै समयझैँ
घुमिरहन्छन्
वनकविताका अर्थहरू
अर्थ अनर्थ अर्थ हुँदै ।

●

प्रगतिवादी स्वर देखा पऱ्यो । सिङ्गो नेपाली खण्डकाव्यको इतिहासमा देवकोटा युग सङ्ख्यात्मक गुणत्मक दुवै दृष्टिले स्वर्णिम बनेको छ ।

## 'सृजामाता' खण्डकाव्यको सङ्क्षिप्त अध्ययन

लक्ष्मीप्रसाद देवकोटाले बनारस प्रवासकालमा रचना गरेका खण्डकाव्यहरूमध्ये 'सृजामाता' एक महत्त्वपूर्ण काव्य हो । यस चरणमा देवकोटाले एक दर्जनभन्दा बढी काव्य रचना गरेका । वि.सं. २००४ मा भारतको बनारस बसाइका क्रममा यिनले विभिन्न विधामा कलम चलाए । ती मध्ये खण्डकाव्य विशेष रहेका छन् । प्रवासमा यिनले ठूलो आर्थिक सङ्कट सहनुपरेको थियो । आर्थिक समस्याले गाँजेपछि देवकोटाले आफ्ना कृतिको प्रकाशनाधिकार टीकादत्त धितालालाई सुम्पिए । साँझबिहानको छाक टार्न टीकादत्त धितालालाई सुम्पिइएका सात ओटा खण्डकाव्यहरूमध्ये 'सृजामाता' पनि एक हो ।

नेपाली साहित्यका ध्रुवतारा देवकोटा भौतिक रूपमा अस्ताएको धेरै वर्षपछि (२०३९) नेपाल राजकीय प्रज्ञा प्रतिष्ठानले टीकादत्त धितालसँग पाण्डुलिपि खरिद गरी 'मैना' खण्डकाव्यसङ्ग्रह प्रकाशन गऱ्यो । वासुदेव त्रिपाठी र ठाकुरप्रसाद पराजुलीको सम्पादनमा प्रकाशित 'मैना'भित्र 'सृजामाता' समेटिएको छ ।

देवकोटाका पूर्ववर्ती काव्यहरू 'मुनामदन' र 'कुञ्जिनी' गाथा काव्यको ढाँचामा रचिएका छन् । देवकोटाका अत्यन्त महत्त्वपूर्ण यी दुई काव्य स्वच्छन्दतावादी काव्य परम्परामा खरो रहेका छन् । एकातर्फ गाथाको शैली अर्कोतर्फ आफ्नो मूल लेखन शैली स्वच्छन्दतावाद, यी दुर्ववाट देवकोटा उत्प्रेरित भए र 'सृजामाता'को रचना गरे भन्न सकिन्छ ।

'मैना' खण्डकाव्य सङ्ग्रहको प्रकाशकीयमा तत्कालीन ने.रा.प्र.प्र.का उपकुलपति माधव घिमिरे लेख्छन्, 'उनी वनारसमा प्रजातान्त्रिक सिद्धान्तले प्रेरित भएका थिए, उनको मनमा देश र परिवार छोड्नुको विरह थियो । उनले सिद्धान्तलाई नारा हैन, कविताको रूप दिए, उनले विरहलाई आँसु हैन, मर्मबोधमा बाहिर ल्याए । त्यस वेलाका उनका कविता जति ओजपर्ण छन्, त्यति नै मार्मिक पनि छन् । त्यहाँ देवकोटाको कवि देवकोटासँगै पनि विद्रोह गरिरहेको थियो र पूर्वकालको भन्दा केही भिन्न रूपमा प्रकट भइरहेको थियो । यो कुराको उदाहरणका निम्ति त्यसकालका सर्वोत्तम काव्य मायाविनी सर्सी र सृजामाता नै पर्याप्त छन् ।'

सृजामाता खण्डकाव्य देवकोटाको वनारस प्रवासकालको महत्त्वपूर्ण उपलब्धि हो । यसमा विषयवस्तुको स्रोतका रूपमा ग्रिसेली पुराकथा आएको छ । मौसमचक्र र ऋतुचक्रसँग सम्बन्धी रहस्य समेटिएको ग्रिसेली पुराकथा यस काव्यको विषय वस्तु बनेर आएको छ । विषयवस्तु पशिचमी पुराकथा भए पनि देवकोटाले यस काव्यमा मौलिक काल्पनिक अभिव्यक्ति दिएका छन् । उत्पाद्य विषयवस्तुको प्रयोग गरिएको यस काव्यमा आदिम प्राकृत सृष्टि र आदिम प्राकृत सत्यको चित्रण स्वच्छन्दतावादी काव्यात्मक चेतका साथ गरेका छन् । गरिबीले आक्रान्त पारेको समयमा रचियको, सौभाग्य पुस्तकालय बनारसलाई सम्पूर्ण प्रकाशनाधिकार सुम्पिएको यस काव्यमा कविको द्रुततर काव्य वेग भेटिन्छ । श्लोक गनेर काव्यको मूल्य निर्धारण गरिनाले पनि उनलाई निर्झर लेखन आवश्यक परेको देखिन्छ ।

पुराकथाले सृष्टिको स्वर्ग, मर्त्य र पाताल तीनै लोकको आपसी सम्बन्धको चर्चा गर्छ । देवकोटाले स्वर्ग, मर्त्य र पातालको केन्द्रविन्दुको रूपमा रहेकी पृथ्वीमाताको मातृशक्तिको उन्मुक्त चित्रण यस काव्यमा गरेका छन् । प्राकृतिक सभ्यताको चिनारी, आदिम विचारधाराको चर्चा गर्न स्वच्छन्दतावादी शैली अपनाएका देवकोटा वातावरणीय सन्तुलन तथा प्रकृतिमा रहेको मौसम चक्रको चर्चा अत्यन्त सरस ढङ्गमा यस काव्यमा गर्छन् । पृथ्वीमा छ महिना उब्जनी हुन्छ र छ महिना पृथ्वी उदास हुन्छिन् भन्ने सन्दर्भ यस काव्यको केन्द्रीय कथ्य बनेर आएको छ ।

*त्यसकारण सुन हे सुन्ने जति फूलका माला पैह्रन,*
*छ महिना पृथ्वी उदासी हुन्छिन् छ मास उब्जन ।*
*(सृजामाता, ४ : ६५)*

ग्रिसेली पुराकथामा दुई ऋतु छन् : जाडो र गर्मी । हामी पनि वर्षा र हिउँद गरेर कृषि विज्ञान तथा वातावरणीय हिसाबले गर्मी र जाडो गरी दुई ऋतुको चर्चा गर्छौं हामी । छ महिना पृथ्वीमा उब्जनी हुन्छ जुन समयमा पृथ्वी हराभरा हुन्छिन् । छ महिना शीतकालमा पृथ्वी उजाड हुन्छ । जाडोका कारण मान्छे तथा वनस्पति पनि उदास देखिन्छन् । यस्तो पुराकथालाई काव्यमा समेटेर देवकोटाले मान्छे र प्रकृति बीचको सम्बन्ध तथा प्राकृतिक स्वरूप परिवर्तनको यथार्थ बोध गराएका छन् ।

मैना खण्डकाव्यका सम्पादकका अनुसार देवकोटाले यस काव्यको सिरानमा दुईओटा शीर्षक राखेका थिए : सुन्दरी प्रसर्पिणी, सृजामाता । पहिलो शीर्षकले यस काव्यमा वर्णित पृथ्वीमाताकी वनस्पति रूपी छोरी प्रोजर्पिनालाई सङ्केत गर्छ भने दोस्रो शीर्षक ले सिरिजमातासँग सम्बन्धित छ । भूमिकाका हिसाबले तथा सन्दर्भका दृष्टिले यस काव्यको शीर्षक सृजामाता नै उपयुक्त रहेको देखिन्छ ।

जम्मा पाँच खण्डमा रचिएको यस काव्यमा प्रथमदेखि चतुर्थखण्डसम्म आख्यान अत्यन्त पुष्ट भएर प्रस्तु भएको छ । आख्यानको दृष्टिले चतुर्थ खण्डमा नै खण्डकाव्यले विश्राम लिएको भए पनि असर नपर्ने देखिन्छ । पञ्चम वा अन्त्य खण्ड औपदेशिक खण्डको रूपमा आएको छ । यो खण्ड आख्यानको ढाँचाबाट मुक्त रहेको छ । कथा चौथो खण्डमा समाप्त भएको र अगाडि बढ्न नचाहने हो भने वा थकाइ मान्ने हो भने विश्राम लिए हुन्छ भन्ने आग्रह गर्दै अन्त्य खण्डको सुरुमा कवि भन्छन् :

*'कथा त मेरो सिद्धिइसक्यो रमाइलो जर्पिना ।*
*टाढालाई जान नखोज्ने पुछून् यही ठाउँ पसिना ॥१॥*
*रहस्य यसको क्या हो त भनी बुझ्नलाई जो खोजून् ।*
*अगाडि बढी कलमको सङ्केत जो मिल्छ सो रोजून् ॥२॥'*

कविका भनाइअनुसार काव्यको मुख्य रहस्य अन्तिम खण्डमा छ । यो खण्ड अत्यन्त वैचारिक दृष्टिले तयार पारिएको छ । सृजामाता खण्डकाव्यमा प्रारम्भ, विकास , चरमोत्कर्ष, प्रतिचरमोत्कर्ष तथा उपसंहार आएका छन् । काव्यका पाँच खण्डमध्ये पहिलो खण्डमा सिरिज आफ्नो फल हेर्न जान्छिन् र यही मौका छोपेर पातालका राजा प्लुटोले सिरिजकी छोरी प्रोजरपिनालाई हेरेको छ । माता नभएको मौका पारेर प्लुटो (यमराज)ले प्रोजरपिनालाई अपहरण गरेर पाताल लैजान्छ । पातालमा अत्यन्त दुःख मानेर, आमा सम्झेर, केही नखाई प्रोजरपिना बसेको प्रसङ्ग पहिलो खण्डमा रहेको छ । दोस्रो खण्डमा फसल हेरेर आमा घर फर्कंदा छोरीलाई कतै देख्दिनन् । छोरी बेपत्ता भएको थाहापाए पछि सिरिज माता शोकाकुल हुन्छिन् र छोरीको खोजीमा निस्किन्छिन् ।

यसै क्रममा विषाद देवी हेकेटीबाट छोरीलाई प्लेटोले चोरेर पातालमा लगेको कुरा सिरिजले थाहा पाउँछिन् । काव्यको तेस्रो खण्डमा प्रोजरपिनाको अपहरणपछि पृथ्वी अन्नपात विहीन हुनपुग्छ । यसबाट सृष्टि प्रकृयामा अवरोध आउँछ । यो कुरा जुपिटरले थाहा पाएपछि सिरिज र प्लेटो बीच मेलमिलाप गराउने विचार गर्छ र मर्करीलाई दूतका रूपमा पठाउँछ । यता पातालको दरबारमा प्रोजरपिनाले सुरुमा प्लेटोको प्रेम प्रस्ताव मानेकी थिइनन् तर जब प्लेटोले प्रेमपूर्वक फल दियो र त्यो फल खाए पछि उनले मनमनै प्लेटोलाई पति मान्न थालिन् । चौँथो खण्डमा सिरिज छोरी खोज्दै हिँड्छिन् तर कता जाने कसरी जाने भनेर अन्योलमा परेको बेलामा कुनै देवताले उनलाई पातालको यमपुरमा जानेबाटो देखाइदिन्छ । सिरिज पाताल पुगेर प्लेटोलाई हप्काउँछिन् र आफ्नी छोरी प्रोजरपिनालाई साथै लिएर पृथ्वी फर्कन खोज्छिन् । यसै खण्डमा आख्यान उपसंहारतिर अघिबढेको छ ।

प्रोजरपिनाले प्लेटोलाई पति मानिसकेकीले विवाह भएकी छोरी सधैँ माइतीघर बस्न सक्दैनन् भनेर मर्करीले सुझाव दिएको छ । उसैको सुझावमा प्रोजरपिना छ महिना आमासँग पृथ्वीमा बसून् र छ महिना आफ्नो पतिघर पातालमा भन्ने थियो । मर्करीले यही सर्तमा प्लेटो र सिरिजमाता बीच सम्झौता गराएको छ । यही आख्यानअनुसार प्रोजरपिना धर्तीमा बस्दा धर्ती हराभरा हुने र उनी आफ्नो पति धरमा बस्दा हिउँदे उदासी लाग्ने प्राकृतिक सत्यको उद्घाटन ग्रिसेली पुराकथाको आधारमा देवकोटाले गरेका छन् ।

यस खण्डकाव्यमा अर्को एउटा उपकथा छ । सिरिज आफ्नी छोरीको वियोग सहन नसकेर छट्पटिँदै आहत भएकी हुन्छे यत्तिकैमा उसले एउटा राजकुमारलाई आफ्नो अध्यात्मसाधनाद्वारा अमर बनाउन खोजेकी छे । अध्यात्म साधनामा बाधा उत्पन्न भएर राजकुमारलाई अमर बनाउन नसके पनि उनलाई सतायु दिएको चर्चा यसमा गरिएको छ । अत्यन्त सान्दर्भिक पाराले कथावस्तु अघि बढेको र उपकथाको प्रयोगले केही विचलित भएको अवस्था रहे पनि पछि मूल कथामा लगेर आख्यानलाई जोडिएकाले कथावस्तु पुष्ट बनेको छ ।

यस काव्यमा जीवनको एउटा पाटो वा एक जीवन खण्ड समेटिएको छ । यहाँ समेटिएका पात्रहरू व्यक्ति पात्र होइनन् । वनस्पतिका प्राण शक्तिका रूपमा रहेकी प्रोजरपिना, पृथ्वीमाता सिरिज, मर्करी, अयोलो, जुपिटर आदि पात्र यहाँ आएका छन् । यीमध्ये सिरिज र प्रोजरपिना मर्त्यलोकसँग सम्बन्धित पात्र हुन् भने अरू अन्य लोकसँग समबन्धित छन् । व्यक्तित्व विकास तथा चरित्र चित्रणका हिसाबले यी पात्रहरू खासै महत्त्वका छैनन् । पुराकथात्मक पात्र भएकाले विषयवस्तुको पुष्ट्याइँका लागि यी सार्थक देखिएका छन् ।

देवकोटाले अवधारणात्मक वा साङ्केतिक पात्रहरूलाई पनि मानवीय व्यक्तित्व प्रदान गरेका छन् । स्वच्छन्दतावादी कवि देवकोटा मानवीय व्यक्तित्वको आयाम दिएर प्रकृतिलाई चित्रण गर्छन् । यो उनको प्रकृतिप्रतिको अनुराग हो ।

यहाँ वर्णित ग्रिसेली पुराकथाले ग्रिसेली समाजको वा ग्रिसेली वातावरणको चर्चा खोजेको भए पनि देवकोटा यहाँ नेपाली परिवेशको सापेक्षतामा वातावण चित्रण गर्छन् । उनले छोरी हराएपछि गोठालालाई सोधेको प्रसङ्ग, सिरिज, प्लेटो र प्रोजरपिनाको चित्रण गर्दा नेपाली परिवेश, नेपाली वातावरण दिएर नेपालीकरण गरेका छन् । नेपाली संस्कारभित्रको माइतीघर र पतिघरको चर्चा यहाँ गरिएको छ । यसबाट देवकोटाले पुराकथालाई नै नेपालीकरण गरेको देखिन्छ ।

सन्तानप्रतिको मोह यसमा आएको छ । प्रेम भावलाई वा वात्सल्यलाई यहाँ मूलभाव बनाइएको छ । माता सिरिजले छोरी खोज्न पाताल प्रवेश गरेको र विवाहिता भए पनि छ महिनाको लागि छोरीलाई फर्काएको प्रसङ्गले यसमा प्रेमभावको सघन प्रस्तुति भेटिन्छ । नवरस मध्येका विभिन्न रस यस काव्यमा आएका छन् । प्रोजरपिना अपहरणमा पर्दा भयानक रस, छोरीको वियोग व्याकुल भएकी सिरिजको चर्चा गर्दा करुण रस, प्लेटो र प्रोजपिनाबीच प्रेम अङ्कुरण भएपछिको सन्दर्भमा शृङ्गार रस आदि रसहरूको प्रयोग गरिएको यस काव्यको अन्तिम खण्डमा सिरिजको वात्सल्य प्रेम आएको छ । वर्णनात्मक कथन पद्धति अपनाइएको यस काव्यमा देवकोटाले विभिन्न अलङ्कारको प्रयोग गरेका छन् । स्वभावोक्ति, रूपक, पुनरुक्ति, संसृष्टि,उपमा, दृष्टान्त, विरोधाभाष जस्ता अलङ्कार यस काव्यमा आएका छन् । जस्तै :

*म पनि सारै अकेला भई खोज्दथें सँगिनी,*
*बयान तिम्रो सुनेर ल्याएँ हे पुष्प-भगिनी ।* (रूपक)

*'खै मेरी छोरी ! छातीकी छोरी !' खै मेरो छोरी नि,*
*खै मेरो छोरी जर्पिना गोरी जगत्की हुरी नि ।* (पुनरुक्ति)

*आमाको दिल झैं हुँदैन दिल छोरीको उपर,*
*कुसुमकोमल सुगन्ध स्नेह मायाले अमर ।*
(उपमा+दृष्टान्त=शङ्कर)

*कलेजा आफ्नो आफ्नो नै मासू आफ्नो नै आत्मा छ,*
*आफ्नो नै मुटु जीवनको जुहार वियोगको रातमा छ ।*
(विरोधाभाष)

यस खण्डकाव्यको प्रथमदेखि चतुर्थ खण्डसम्म मध्यम भाषाको प्रयोग गरिएको छ । यसको अन्त्य खण्डले भने विशिष्ट खालको वौद्धिक पाठकको अपेक्षा गर्दछ । रङ्गीन शैली, सुन्दर आख्यान, प्रकृतिको मानवीकृत स्वरूप, पाश्चात्य वातावरणलाई नेपाली धरातलमा गरिएको चित्रण आदिले सृजामाता देवकोटाको उत्कृष्ट खण्डकाव्य बनेको छ । यसमा उनले पश्चिमी स्वच्छन्दतावादको नेपालीकरण गरेका छन् । यो नेपाली खण्डकाव्य परम्पराको महत्त्वपूर्ण प्राप्ति हो ।

### सन्दर्भ सामग्री


१. *लक्ष्मीप्रसाद देवकोटा, सृजामाता, मैना खण्डकाव्य सङ्ग्रहअन्तर्गत, नेराप्र्प, काठमाडौं ।*
२. *महादेव अवस्थी, देवकोटाको खण्डकाव्यकारित, एकता प्रकाशन, काठमाडौं ।*
३. *कुमारबहादुर जोशी, महाकवि देवकोटा र उनका महाकाव्य, साझा प्रकाशन, ललितपुर ।*
४. *वासुदेव त्रिपाठी र अरू (सं) नेपाली कविता भाग ४, साझा प्रकाशन, ललितपुर ।*
५. *वासुदेव त्रिपाठी, नेपाली कविताको सिंहावलोकन, साझा प्रकाशन, ललितपुर ।*


●

sljtf — **रोशन थापा 'निरव'**



## मूर्ति र खोपा

युगौंदेखि राखिएको मूर्ति खोपाभित्र
मान्ने स्वस्ति गर्दागर्दै शक्तिवान् बनेको थियो त्यो
अब त्यो खोपा पनि सुनिन्छ, खाली भयो रे
खाली हुनुपर्छ भनेरै अनेक ध्वनि उत्पत्ति भएको रे
तर त्रसित मूर्ति खोपाबाटै अर्को खोपा
निर्माणमा लागेको छ रे
यो पनि सुनियो अथवा त्यो मूर्तिको सट्टा
अर्को शक्ति वा मुर्ती स्थापना हुने हल्लासँगै
मान्छे फेरि शासित हुनेक्रम बढेको छ रे !

अचेल यस्तै असङ्ख्य खोपाहरू
छिनमा खाली हुने
छिनमा भरिने भइरहेका छन्
यो के चटक हो, के रमिता
बुझ्न असमर्थ सधैँ सर्वसाधारणहरू
फेरि पनि त्रसित नै
फेरि पनि पीडित नै
फेरि पनि शोसित नै

यो खोपाको किंवदन्ती परापूर्वदेखि
आज पनि त्यति नै चर्चित छ
आज पनि त्यति नै भयावह छ

यतिखेर मेरो कविता
कविताभित्रका शब्दहरू
शब्दभित्रका भावहरू
त्यसरी नै असमञ्जसमा प्रेषित छन्
जसरी यहाँका ती जनसामान्यहरू
जो परापूर्वकालदेखि
यसरी नै असमञ्जसमा बाँच्तै आए

अब पनि खोपा-माहात्म्य
समूल नष्ट नभए फेरि
क्षणक्षणमा अनेक मूर्तिहरू
अनेक अवतार लिएर
फेरि पनि शक्तिमा, भक्तिमा, रूपमा,
जादुमय यथार्थमा
आउनेछन्, आइरहनेछन्, सताइरहनेछन् ।

●

– अर्चना दाहाल



# मनोसामाजिक समस्या र मनोविमर्श सेवाको आवश्यकता

मानिसको सबैभन्दा शक्तिशाली अंग मन (Mind) हो । मनले मानिसलाई काम गर्न प्रेरित गर्छ र उसको आज्ञा मानिसले चाहेर वा नचाहेर मान्नैपर्छ । वास्तवमा मन मानिसको मालिक हो र मनले अह्राएअनुसार गर्नु मानिसको प्रकृति हो । मानिस प्रकृतिविरोधी हुन सक्दैन । मनको कारण नै मानिस छ र उसको अस्तित्व पनि । त्यो मन नै हो जसले मानिसलाई प्रेम, घृणा, सुख, दुःखजस्ता संवेग वा संवेदनाहरूसँग परिचय गराउँछ । मन देखिँदैन तर महसुस गरिन्छ र यही आभास नै संसारलाई अड्याउने शक्ति हो ।

मानिस सामाजिक प्राणी हो । घरपरिवार बन्ने प्रक्रियामा समाज पनि बन्छ जहाँ मानिसले आफूलाई सुरक्षित अनुभव गर्छ । समाज मानिसको अर्को घर हो । समाजबाट उसले अनेकथरिका शिक्षा हासिल गर्छ र समाजलाई नै केही दिनसक्ने बन्छ । समाजअनुसारको प्रतिफल निस्कने हुनाले मानिसलाई सामाजिक प्राणी भनिएको हो । मानिसले त्यही काम गर्छ जुन उसले समाजबाट सिक्छ ।

## मनोसामाजिक समस्या

मनोसामाजिक भन्ने शब्द मन र समाज मिलेर बनेको हो । मानिसको मनले गर्ने कार्यले समाजमा पर्ने असरको आधारमा मनोसामाजिक समस्या देखापर्छन् । मानिसले आफू र समाजको बीचमा तालमेल मिलाउन नसकेर उसमा आइपर्ने शारीरिक, मानसिक र सामाजिक समस्यालाई मनोसामाजिक समस्या भनिन्छ । उसको त्यो समस्याले उसको मन, शरीर, व्यवहार र सम्बन्धमा प्रतिकूल असर त पर्छ नै साथमा उसको यस्तो अवस्थाका कारण समाजका अन्य मानिसलाई पनि प्रत्यक्ष-अप्रत्यक्ष असर पर्न जान्छ ।

उदाहरणका लागि, हरि चौध वर्षीय किशोर हो । समाजको मूल्य मान्यता, रीतिरिवाज र अनुशासनको पालना गर्न नसकेका कारण उसले मनमनै आत्मग्लानी, असुरक्षा र मूल्यहीनताको महसुस गरिरहन्छ । समाजका अन्य व्यक्तिले पनि उसैलाई अधर्मी भन्दै गाली गर्ने, नराम्रो भन्ने, अपहेलना गर्नेजस्ता कार्यहरू गर्दछन् । यस्तो अपहेलनाले उसमा झन् विषाद, कुण्ठा, आलस्यजस्ता अनेक समस्याहरू आइपर्न सक्छन् । त्यसपछि हरिको व्यवहारमा परिवर्तन हुँदै जान्छ । उसलाई एक्लै बस्न मन लाग्ने, अरूसँग बोल्न मन नलाग्ने, दिक्क लाग्ने, रिस उठ्ने, काम गर्न मन नलाग्ने हुन्छ । ऊ अरूसँग बोल्दा झर्किने र चिड्चिड्याउने गर्न थाल्छ । काममा ध्यान नदिँदा असफल हुने र असफलताको दोष अरूलाई दिनेजस्ता लक्षण पनि उसमा देखापर्छन् ।

बिस्तारै उसको मनमा कतै म बहुलाएको त होइन ?, भन्ने खालको प्रश्न उठ्न सक्छ । न अरूले पनि मलाई बहुला नै पो देख्छन् कि ?, भन्ने सोचाइले उसको मन छियाछिया हुन्छ । त्यसपछि ऊ आफैं अरूसँग तर्किएर हिँड्न थाल्छ र सबैलाई शंकास्पद दृष्टिले हेर्न थाल्छ ।

हरिलाई मात्र होइन समाजका प्रायः मानिसलाई मनोसामाजिक समस्याले सताएको हुनसक्छ । फरक यति मात्र हो कि कसैले आफू र समाजबीचमा सन्तुलन राख्न सक्छन् भने कसैलाई यस्ता समस्याको सामना गर्न निकै कठिन हुन्छ । हरेक मानिसको सामना गर्नसक्ने क्षमता फरक हुन्छ जसको कारण समस्याको असर पनि सबैमा फरक हुन्छ । मनोसामाजिक समस्याबाट सबै मानिस पीडित छन् तर सबैमा मात्रा र किसिमको भिन्नता पाइन्छ । हेर्दा समस्या नलागे पनि मनोसामाजिक समस्या वास्तविक समस्या हो । अरू सबै समस्या प्रस्ट देखिने मात्र नभई तिनका कारण पनि खुलस्त हुन्छन् । तर मनोसामाजिक समस्या न त देखिन्छ, न त सजिलै बुझ्न वा बुझाउन नै सकिन्छ ।

प्रत्येक मानिसको प्रकृति फरक हुन्छ । मानिसका सबै अङ्गहरू उस्तै हुँदाहुँदै पनि हरेक मानिस फरक देखिनुको मुख्य कारण नै प्रकृति हो । मानिसले हेर्ने, बोल्ने, सुन्ने, विचार गर्ने, महसुस गर्ने, माया-प्रेम गर्ने, आदर गर्ने, सोच्नेजस्ता क्रिया सबैमा फरक हुन्छ । हामी सबैले गर्ने व्यवहार फरक भए पनि हामीले गर्ने एउटा गल्तीचाहिँ समान छ । हामी अरूलाई हाम्रै किसिमले व्यवहार गर्छौं जसका कारण हामीमा समस्या देखापर्छ ।

उदाहरणका लागि, हामीले कसैलाई हेरेर हाँस्दा त्यो व्यक्तिले आफूलाई गिज्याएको पो हो कि भन्ने महसुस पनि गर्न सक्छ । अनि, उसले असामान्य लाग्ने गरी हाँस्छ, जुन हाँसो हामीलाई मन नपर्न सक्छ । त्यसपछि हामी भन्छौं, कस्तो मान्छे रहेछ ? यसरी हामी दुईबीच समस्या देखापर्छ र हामी त्यसमा अल्झिन बाध्य हुन्छौं ।

## नेपाली समाजमा मनोसामाजिक समस्या

हाम्रो समाजका अधिकांश मानिस मनोसामाजिक समस्याबाट ग्रस्त भएपनि उनीहरू यस्ता समस्या बारे चेतनशील छैनन् । बहुसङ्ख्यक नेपाली अशिक्षित भएकाले यस्तो परिस्थिति देखिएको हो । हुनत शिक्षित मानिसमै पनि यस्ता सामस्याबारे जानकारीको अभाव छ । मनोविमर्श सेवा ग्रहण गर्नका लागि मनोविमर्शकर्ता कहाँ जाने व्यक्तिहरूको सङ्ख्या निकै न्यून छ । नेपाली समाजको अर्को मुख्य समस्या भनेको असहयोगी भावना हो । आफूले सहयोग गर्नु त कहाँ हो कहाँ, अरूले दिन खोजेको सहयोगलाई समेत शंका गर्ने, अस्वीकार गर्ने अनि कसरी हुन्छ असफल पार्ने तिर लाग्ने बानी प्रायमा विद्यमान छ । सबैले यस्तो कुविचार हटाएमा मात्र सेवाको वातावरण बन्न सक्छ र मनोविमर्शकर्ताले प्रदान गर्ने सेवामा सहयोग मिल्न सक्छ ।

## मनोविमर्शकर्ताको आवश्यकता

मनोसामाजिक समस्याले ग्रस्त समाजलाई सहयोग गर्न मनोविमर्शकर्ताहरूको आवश्यकता पर्दछ । कठिन परिस्थितिमा भएका व्यक्तिहरूका समस्या सुनिदिने, बुझिदिने र यस्ता समस्याबाट माथि उठ्न प्रेरणा तथा हौसला दिने व्यक्ति नै मनोविमर्शकर्ता हो । सेवाग्राहीलाई भावनाको अर्थ बुझ्न र स्वस्थ जिन्दगी बाँच्न मनोविमर्शकर्ताले साथ दिन्छन् ।

ज्ञान, सीप र धैर्यताका साथै खुलापन लगायत अन्य अति आवश्यक विशेषताहरूका साथ सेवा गर्न मनोविमर्शकर्ताहरू अघि सरेका हुन्छन् । मनोविमर्शकर्ताहरूसँगको वार्तामा नै सेवाग्राहीले आफ्नो आधा समस्या हल भएको महसुस गर्छन् किनभने मनोविमर्शकर्तालाई सेवाग्राहीले कस्तो किसिमको व्यवहार चाहन्छ भन्ने कुराको ज्ञान हुन्छ । सेवाग्राहीले चाहेजस्तो व्यवहार गर्न सक्ने क्षमता र सीप पनि मनोविमर्शकर्तामा हुनुपर्ने गुण हो । ससाना कुरालाई समेत अत्यन्तै ध्यान दिनुपर्ने कारण यो कार्य अत्यन्तै संवेदनशील छ ।

नेपालमा मनोविमर्श सेवाको अवस्था कमजोर छ । तर, आजकल मनोपरामर्श संस्थाहरू पनि उल्लेख्य सङ्ख्यामा खुल्दै छन् जहाँ सक्षम तथा सचेत मनोविमर्शकर्ताले उचित ढङ्गले सेवा प्रदान गरिरहेका छन् । मनोविमर्शकर्ताले आफ्ना सामान्य व्यवहारदेखि विशेष गुणसम्म ध्यान पुर्याएर अत्यन्तै संवेदनशील भएर काम गर्दछन् । हाम्रो समाजमा पनि यो विषयको क्रमशः विकास हुँदैछ ।

*(आगामी अंकदेखि तन्नेरी डटकम मासिक पत्रिकामार्फत मनोविमर्श सेवा प्रदान गरिने भएकाले, पाठकवृन्दलाई आफूमा परेका मनोसामाजिक समस्या लेखी पठाउन अनुरोध गर्दछौं । – सम्पादक)*

## अन्तिम इच्छा (Last Will)

त्यसरी मृत्युवरण गर
जसरी मैले एकचोटि
उसलाई मर्दै गरेको देखेको थिएँ
त्यो साथी जसले चट्याङ गर्जाउन सक्थ्यो
र एउटा दैवीय हेराइ,
मेरो कालो-अँध्यारो यौवनमाथि
निडर र गहिरो
नृत्य गर्दैगर्दाको युद्धजस्तो

योद्धाहरू माझको ताराहरूसँगै
विजेताहरू माझको भारी हृदयहरूसँगै,
उसको भाग्यमाथि थोपरिएको एउटा भाग्य
साह्रो, गाह्रो अघि बढिरहेको

जितको कल्पनाले अलि तर्सिएको
आफ्नो विजय-मृत्युप्रति अति खुसी भएको

सार्वभौम मृत्युलाई नै आदेश दिँदै
उसले भन्यो-
कोही कहीं पनि फर्किंदैन...
त्यसरी मृत्युवरण गर
जसरी मैले एकचोटि
उसलाई मर्दै गरेको देखेको थिएँ
विजयी, स्वतन्त्र

आत्माको सैन्य स्कुलदेखि
त्यो जसले मलाई, मार्ने छैन,
त्यसैले बलियो बनाउनेछ ।

●

# फ्रेडरिक नित्से : एक परिचय



*विनिर्माणवादका प्रेरणापुरुष र शून्यवादका प्रवर्तक जर्मन दार्शनिक फ्रेडेरिक नित्से उन्नाईसौं शताब्दीका अत्यन्त प्रभावशाली व्यक्तित्वहरूमा एक हुन् । इसाई मान्यताभित्र अन्तरनिहित अन्धविश्वासले गतिकुण्ठित तत्कालीन युरोपमा ईश्वरको मृत्युको उद्घोष गर्ने नित्सेले जति आलोचक कमाए, तीभन्दा बढी समर्थक कमाए । विशेषगरी, अठारौं शताब्दीको वैज्ञानिक क्रान्तिले स्थापित गरेको युरोप केन्द्रित 'सत्य' को औचित्यहीनताको दाबी गरेका थिए ।*

*फ्रेडेरिक नित्सेको जन्म सन् १८४४ अक्टुबरमा प्रुसियाको रोकनमा भएको थियो । तत्कालीन प्रुसेली राजा फ्रेडेरिक विलियमकै जन्मदिनमा जन्मिएको हुनाले उनका बुबाले उनको नाममा फ्रेडेरिक जोडिदिएका थिए ।*

*नित्सेको जीवन अत्यत साधारण थियो, तर उनको व्यक्तित्व असाधारण थियो । उनका पिता चर्चका एक पादरी थिए । त्यसैले उनी धार्मिक पवित्रताको वातावरणमा हुर्किएका थिए । सानैमा बाबुको निधन भएपछि महिलाहरूको सामिप्यमा हुर्केका नित्सेमा नारीसुलभ स्वभावको विकास भयो, जसले जीवनभर उनलाई हीनताबोध भयो । यसैले गर्दा उनी जीवनको उत्तरार्द्धमा नारीविरोधी भएको मान्यता पनि राखिन्छ ।*

*१८ वर्षको उमेरमा आइपुग्दा उनी पूर्णतः नास्तिक भइसकेका थिए । कुनै देवी-देवताको अस्तित्वमा भन्दा कुनै सर्वशक्तिमान पुरुष (सुपरमेन) को अस्तित्वमा उनले विश्वास गर्न थाले । दार्शनिक सोफेनहाबरबाट प्रभावित नित्सेले जीवनमा दुःखलाई आत्मसात् गर्न सिके ।*

*२३ वर्षको उमेरमा उनी सेनामा छिरे, तर घोडाबाट लडेर गम्भीर घाइते भएपछि उनको सैनिक जीवन समाप्त भयो । त्यसपछि उनले प्राज्ञिक अभ्यासमा हात हाले र भाषाशास्त्रको अध्ययन गरे । भाषाको अध्ययनमा अत्यन्त जेहेनदार नित्सेले डिग्री पाउनुभन्दा अगाडि नै भाषाशास्त्रको प्राध्यापकको गरीमामय पद पाए । स्वास्थ्यका कारण उनले सन् १८९७ मा यस सेवाबाट अवकाश लिए । सन् १८८८ मा उनी मानसिक रोगबाट ग्रसित भए र अन्ततः सन् १९०० मा उनको निधन भयो ।*

(प्रस्तुति : महेस पौडेल)

## xfOs'



रत्नशमशेर थापा

१. नाङ्गिदै छन् ,
हिउँको अभावमा
हिमालहरू ।

२. लोप हुँदैछ
सौन्दर्य पहाडको
नपाई स्नेह ।

३. मख्ख पर्दैछन्
लहरको स्पर्शमा
किनाराहरू ।

४. ओसियो धर्ती
निठुरी मौसमले
बदल्दा रङ ।

५. खोज्दैछन् वास्ना
कागजको फूलमा
अल्लारेहरू ।

६. को सुन्छ यहाँ
खोला नदीहरूको
तीतो गुनासो ।

७. झर्दैछन् कठै
सिगारको सिट्ठीझैं
इच्छा पलमै ।

८. मनाऊ खुसी
धारिलो छुरा धसी
मेरो मुटुमा ।



# म गीतकार पनि भइहालें

हरेक वर्ष टक्सार बजारबाट देखाइने धार्मिक नाटक र भोजपुर बजारबाट देखाइने सामाजिक नाटकहरूमा थुप्रै गीतहरू सुन्न पाइन्थ्यो । शाहीसेनाहरूद्वारा देखाइने सांस्कृतिक कार्यक्रमहरूमा उत्तिकै राम्रा गीतहरू हुन्थे । गीतैगीतको आकाशमुनि उड्ने चराहरूको जीवन थियो मेरो बाल्यकाल ।

आमाको गर्भमा रहँदादेखि नै मैले मीठो गीत सुन्न पाएँ । मीठो गायन सुन्न पाएँ । कति भाग्यमानी म ! बहुत थोरैले पाउँछन् यस्तो मौका । यस्तो मौका पाएकैले होला म गीतकार पनि भइहालें । यस्तो मौका नपाएको भए सायद म गीतकार हुन सक्दिनथें होला ।

कोही कोही त भन्छन्, 'तिमी त अघिल्लो जन्ममा पनि गीतकारै थियौ होला र त लेख्छौ यति राम्रा गीतहरू !'

के थाहा मलाई अघिल्लो जन्मको कुरा ! हुन पनि सक्छ, नहुन पनि सक्छ । अघिल्लो जन्मको कुरा छाडौं, त्यति बेला म गीतकार थिएँ कि थिइनँ- त्यो कुरा पनि छाडौं, अहिलेको जन्ममा चाहिँ मलाई साह्रै रमाइलो लागेको छ, गीतकार हुन पाएकोमा । साह्रैसाह्रै नै मज्जा लागेको छ ।

गीत लेख्नु पर्दा मलाई खासै अप्ठ्यारो पर्दैन । दस, एघार यस्तै, वर्षको उमेरदेखि मैले गीत लेख्न थालें । या भनौं गीतले मलाई लेख्न थाल्यो ।

*मेरो सानो मुरलीमा मेरो देश नअट्ला*
*तर मेरो मुरलीले भाखा राखौं भन्छ*
*मेरो सानो मुटुभित्र मेरो देश नअट्ला*
*तर मेरो दस औंलीले देशै ढाकौं भन्छ*

यो गीत, जुन गीत लेखेर मैले पाउनु माया पाएँ यो मैले सत्र, अठार वर्षको उमेरमै लेखिसकेको थिएँ । अचम्म लाग्छ कसरी लेखें हुँला यो गीत मैले त्यो उमेरमा ! त्यसरी कल्पना गर्न त अहिले पनि आउँदैन मलाई । त्यसैले मैले माथि गीत लेख्न थालें मात्र नलेखेर गीतले मलाई लेख्न थाल्यो भन्ने पनि लेखेको छु, याद गर्नोस् है ।

मलाई माया गर्ने पाठकहरूले मेरो गीत-लेखनको बारेमा साँचो कुरा जान्ने हो भने यो कुरा बुझ्न एकदमै जरुरी छ । गहिरो गरी बुझ्न जरुरी छ यो कुरालाई । यस्तो मलाई मात्र नभएर अरूअरूलाई पनि हुन सक्छ । सोध गऱ्यो भने, गहन रूपले नियालेर हेऱ्यो भने यथार्थ पत्ता लाग्न सक्छ । कुनै सिद्धान्तको साँचोभित्र अटाउँदैन भनेर कुनै कुरालई फ्यात्त फाल्न मिल्दैन; मिल्दै मिल्दैन ।

धेरै पटक मलाई यस्तो अनुभूति भएको छ । मानौं कोही छ जो सधैं मेरो पछाडिपछाडि बसेर मेरा सारा कुराहरू लेख्छ, मेरै हातहरूले सधैं अदृश्य रूपमा रहेर अरूहरूदेखि ।

जन्मजात गीतकार वा कवि भएर जन्मने भनेको सायद यही होला कि । तर यो व्यक्ति मैले अनुभव नगरेका, मैले अनुभूत नगरेका कुराहरू भने लेख्न सक्दैन । मेरै अनुभव, मेरै अनुभूतिबाट जन्मेका कुराहरूलाई मीठो ढङ्गले, कलात्मक पाराले, अनौठो चित्र, अनौठो बिम्ब देखिने गरी लेख्छ । तज्जुब छु म आफैं पनि ऊदेखि ।

आफ्नै हातले लेखेको त्यो बिम्बलाई लेखिसकेपछि जब म देख्छु, आफैं चकित हुन्छु । यस्तो आश्चर्य मलाई धेरैधेरै पटक भएको छ । तर अरूले देख्दा चाहिँ मेरा सबै कुराहरू लेख्ने म आफैं नै हुँ । हो पनि, होइन भन्ने तागत कसको ? यस्तो अनुभूति म आफैंलाई पनि विशेष विशेष क्षणमा मात्र हुने हो, सँधै हुने त होइन ।

मेरी आमा कुशल सँगिनी-गायिका हुनुहुन्थ्यो । त्यसैले गर्भमा हुँदा मात्र होइन, जन्मेर ठूलो हुँदासम्म पनि मैले उहाँको सँगिनी-गायन बारम्बार सुन्ने मौका पाइरहें । मलाई रोमाञ्चक किसिमले सबभन्दा सम्झना आउने क्षण चाहिँ हो, म तीन, चार या पाँच वर्ष कतै हुँदा मलाई आफ्नो काखमा राखेर उहाँले सँगिनी गाएको र गाउँदागाउँदै उहाँ धरधरी रुँदा उहाँका अश्रुधारहरूले मेरो शरीर भिजेको क्षण ।

मलाई साह्रै मन पर्ने, उहाँले बारम्बार जसो गाउने, काजी वंशराजको दुःखद् कथाको सँगिनीको धेरै भाग अहिले पनि मलाई कण्ठै आउँछ । स्तनपानसँगै आमाको काखमा बसेर गायनको आनन्द लिन पाउनु साह्रै नै विलक्षण क्षण हो । यो पनि मलाई जुऱ्यो । के गर्ने भाग्यमा भएपछि यस्तो हुँदो रहेछ ।

यति मात्र कहाँ हो र ? म जुन ठाउँमा जन्में त्यो ठाउँको सारा वातावरण नै गीतमय थियो । लोकगीत र लोकनाचको त महासागरमै जन्मेको थिएँ म । भाउजूहरू, दिदीहरू, उहाँहरूका साथीहरू, को गाउनुहुन्नथ्यो सँगिनी ! म सँगसँगै गाईबस्तु चराउन जाने भाउजूहरू, दिदीहरूले मीठामीठा सँगिनीहरू, गीतहरू गाएर सुनाइरहनुहुन्थ्यो मलाई । मैले कसरी भुल्नु उहाँहरूको यत्रो ठूलो योगदानलाई ?

मेरो काकाको माइलो छोरा हुनसम्मको राम्रो गायक हुनुहुन्थ्यो । जनकविकेशरी धर्मराज थापाका गीतहरू जनकविकेशरी धर्मराज थापाले भन्दा पनि मीठो गरी गाउन सक्नुहुन्थ्यो । त्यस्तै छिमेकको अर्को दाजु यदुकुमार कार्की महान् सङ्गीतकार तथा गायक अम्बर गुरुङका र त्यति बेलाका सुप्रशिद्ध अरू पनि गायक-गायिकाहरूका गीतहरू साह्रै सुन्दर तरिकाले गाइरहनुहुन्थ्यो । म सधैं यी महान् प्रतिभाहरूको सान्निध्यमा हुन्थें, अनि कसरी नहुनु म गीतकार, मेरो दाजु वासुदेव नेपाल, मेरा प्रिय दिदीहरू, माथ्लो घरकी सानी माइली भाउजू, मेरो गीत-लेखनको यत्नको तहतहमा हुनुहुन्छ ।

त्यति बेला भोजपुरमा जहाँ पुगे पनि, जता पुगे पनि लोकगीतको महासागरमा बग्न, लहरिन पाइन्थ्यो, मज्जाले । मेरो समयको पनि ठूलो योगदान छ म गीतकार हुन ।

वर्षमा महिना दिनभरि लाग्ने डबली मेला गीतैगीत, नाचैनाचले उफ्रिन्थ्यो । हरेक वर्ष टक्सार बजारबाट देखाइने धार्मिक नाटक र भोजपुर बजारबाट देखाइने सामाजिक नाटकहरूमा थुप्रै गीतहरू सुन्न पाइन्थ्यो । शाहीसेनाहरूद्वारा देखाइने सांस्कृतिक कार्यक्रमहरूमा उत्तिकै राम्रा गीतहरू हुन्थे । गीतैगीतको आकाशमुनि उड्ने चराहरूको जीवन थियो मेरो बाल्यकाल ।

बिर्सिनसक्नुका चण्डी नाच, मारुनी नाच, बालन नाचका झाँकीहरूको झझल्को अहिले पनि आइरहन्छ मेरो आँखामा ।

हाइस्कुलमा पढ्दा अतिरिक्त क्रियाकलापअन्तर्गत हुने हरेक कविगोष्ठीहरूमा, बाहिर हुने हरेक कविगोष्ठीहरूमा म बरोबर भाग लिइरहन्थें । कसरी भुल्न सक्छु म मेरा महान् गुरुहरूको महान् योगदानलाई ? मेरा अग्रजहरूको महान् योगदानलाई ?

अलि ठूलो हुँदा, पत्रपत्रिकाहरू पढ्न थाल्दा कविवर माधव घिमिरेका गीतहरूले छुन थाले मलाई । ती गीतहरू पढ्दा तिनीहरूको कलात्मक प्रस्तुतिले हुरुक्कै हुन्थें म । पछि

जनकविकेशरी धर्मराज थापा आफैँ भोजपुर आउनुभयो । उहाँका गीतहरूले त प्रभाव पारे, पारे, त्यो भन्दा बढी कथा भन्दै गीत गाउने उहाँको शैलीले म हुनसम्म प्रभावित भएँ ।

एक समय थियो, मेरो उद्घोषण गीतभन्दा मीठो हुन्थ्यो, एकदमै मीठो ! यसका लागि मैले जनकविकेशरी धर्मराज थापा, मेरी आमा, मीठो न मीठो शैलीले पुराण वाचन गर्नुहुने मेरो आफ्नै काकाप्रति हुनु आभारी हुनै पर्छ । मेरो काका, जसको काखमा बसेर म पुराणका सुन्दर कथाहरू सुन्थेँ, कस्तो राम्रो पुराणवाचक हुनुहुन्थ्यो उहाँ !

जनताका प्रिय कवि केवलपुरे किसानका कविता र गीतहरूले, जनकवि गोकुल जोशीका कवितामय गीतहरूले पनि मलाई पार्नु प्रभाव पारेका थिए- मेरो बाल्यकालमा । मेरो पहिलो सिर्जना हिमालको प्रशंसामा गीति छन्दमा जन्मिएको गीत थियो । त्यसपछि पनि धेरै गीतहरू लेखेँ मैले गद्यकविता लेख्न थाल्नुभन्दा धेरै पहिले ।

ओकेन्द्रबहादुर रायामाझी- यो एउटा नाम हो साथीको । उमेर अलि ठूलो भएको हुनाले दाइ भने पनि हुन्छ । मेरो सहपाठी हाइस्कुलको । उहाँ नै हो मैले पहिलोपल्ट गीत लेख्दा मलाई मद्दत गर्ने । हिमालको बारेमा लेखिएको गीति कविता लेख्दा मद्दत गर्ने । उहाँ मलाई गीत लेख्न मद्दत गर्नुहुन्थ्यो, यो कुरा त आफ्नो ठाउँमा छँदै छ, त्यो भन्दा बढी तन्नेरी-तरुनीहरूले जुहारीमा कसरी कस्ता गीतहरू गाउँथे त्यो पनि मलाई केलाई-केलाई बुझाउनुहुन्थ्यो ।

पहाड मन पर्छ मलाई । जहाँ पहाडहरू छन् त्यो ठाउँ सुन्दर लाग्छ, आफ्नो लाग्छ, घरजस्तो लाग्छ मलाई । खुला आकाश । खुला निलो आकाशमा चाँदीमय बादल या सगर डढेको आकाश । या इन्द्रेनी टाँगिएको आकाश । तरेली परेका फाँटहरू । हरियो वन । खुला क्षितिज । ससाना खोलीहरू या ससाना बाटाहरू । खुला चहुर र बुट्यानहरू । उडिरहेका चराहरू । गाईबस्तु र गोठहरू । पहाडी मानिसहरू । उनीहरूका साना सुन्दर घरहरू । घरघरबाट निस्केर आकाशतिर गइरहेका परीजस्ता धुवाँहरू । मानीहरू या हावामा हल्लिरहेका ध्वजाहरू । यी सब मलाई खुब मन पर्छन् । यिनीहरू रसाएपछि जन्मन्छन् मेरा गीतहरू ।

मीतबा मीतआमा भनेको आफ्नै बाआमासरहका मनिसहरूको नाम हो धर्मले बास गर्ने पहाडी बस्तीहरूमा । भोजपुरको, पोखरेको मेरो घरभन्दा अलि माथि लेकमा मेरो मीत बाआमाको घर थियो । माइलोचाहिँ मीत दाजुसँग गोठमा खूब रमाइला दिनहरू बिताउँथेँ म । भुइँकुहिरोसँग अँगालो मार्दै खूब गीत लेख्थेँ म । मलाई मेरो माइलो मीत दाजुले क्या प्रेमले सघाउनुहुन्थ्यो गीत लेख्न । त्यसैले जबजब म आफूलाई गीतकारका रूपमा हेर्छु, त्यो गोठ, त्यो खर्क र माइलो मीत दाजुको खूब याद आउँछ ।

एसएलसी पास गरेर धरान आएपछि पनि मेरो गीत लेखनको मोह मरेन । कथा हालेर लोकगीत गाउँदा मेरो कलेजको प्रिन्सिपल महाप्रसाद रिजालले कस्तो मीठो अँगालो हाल्नुभएको थियो मलाई ! वाह, कस्तो मीठो अँगालो ! अनि किन छाड्नु मैले गीत गाउन । किन छाड्नु मैले गीत लेख्न ।

काठमाडौं आएपछि, कविवर माधव घिमिरेलाई प्रत्यक्ष रूपमा भेटेपछि, कवि दाजु कृष्णप्रसाद पराजुलीको न्यानो माया पाएपछि मेरो गीतको खेती झनै उर्वर भयो । जब रामेशले मेरा शब्दहरूमा सङ्गीत भर्न थाल्यो, वाह ! त्यसपछि त पङ्ख लागिहाल्यो नि मेरो गीत-लेखनमा । शब्द र श्रुतिको सच्चा मिलन त्यतिखेर भयो । मेरा गीतहरूको पूर्ण जनम त्यतिखेर भयो । एउटा राम्रो गीतकार बनाउन आफ्ना सङ्गीतका हातहरूले सुमसुम्याउँदै धेरै न्यानो माया प्रदान गऱ्यो मेरो साथी रायनले पनि त्यो बेला ।

मेरा गीतहरूलाई चारो दिने, तिनको राम्रो न राम्रो किसिमले हेरविचार गर्ने सुअवसर दिदी पारिजातलाई मिल्यो । उहाँले एकदमै मीठो किसिमले निभाउनुभयो आफ्नो कर्तव्य । पारिजात दिदीको डेरामा हाम्रा गीतहरूलाई माया गर्ने अर्की दिदी हुनुहुन्थ्यो सुकन्या । पारिजात दिदीको डेरामा आउनुहुने नेपाली साहित्यका एकसेएक महारथीहरूले पनि बडो स्नेहले हाम्रा गीतहरूको लालनपालन गर्ने महान् कर्तव्यलाई निभाउनुभयो । उहाँहरू हाम्रा प्रशंसक त बन्नुभयो-बन्नुभयो, उहाँहरू हाम्रा प्रेरक पनि बन्नुभयो- नयाँनयाँ गीत रचनाका लागि ।

*(पारिजात दिदी बिरामी हुनुहुन्थ्यो त्यसैले उहाँलाई भेट गर्न नेपाली साहित्यका महारथीहरू उहाँको डेरामा प्रायः पालैपालो गरेर आइरहनुहुन्थ्यो ।)*

पारिजात दिदीको घरमा स्वदेशी महारथीहरू मात्र होइन विदेशी महारथीहरू पनि आउनुहुन्थ्यो । खूब प्रेरणा दिनुभयो उहाँहरूले पनि मेरो गीत-लेखनको खेतीलाई उर्वर बनाउन ।

मेरो गीत-लेखनमा, खास गरी विषयवस्तु चयनमा फराकिलो न फराकिलो वृत्त छ- यो मैले मेरो आफ्नो परम्पराबाट मात्र सिकेको होइन, विदेशका सुन्दरसुन्दर परम्पराहरूबाट पनि सिकेको हो । त्यति बेला मेरो गीत-लेखनलाई विदेशी गीतहरू सुनाएर ठूलो मद्दत पुऱ्याउनेहरूमा पारिजात दिदीकै डेरामा भेटिनुभएको सान्द्रा जेडिस्टाइन र विदेशीहरूबीच कार्यक्रम दिने सन्दर्भमा भेटिनुभएको नोर्मा खरवर्गको नाम मैले एकदमै आदरपूर्वक लिनुपर्छ भन्ने मलाई लाग्छ ।

पारिजात दिदीको घरमा सुकन्या दिदी पछि अर्की दिदी थपिनुभयो चुणा दिदी । उहाँका छोरीहरू सुचित्रा, तमसा र शीतु । चुणा दिदीको श्रीमान् सचेन लामा । पारिजात दिदीकी घनिष्ट साथी दया सिंह र उहाँका दुई जना बहिनीहरू र उहाँहरूकी भाउजू । पारिजात दिदीकी अर्की मिल्ने साथी सत्यभामा दिदी । यी सबै नामहरू हाम्रो गीतिमय फूलबारीका मालीका नामहरू हुन् ।

मेघबहादुर श्रेष्ठ, गोरखबहादुर श्रेष्ठ, भीमप्रसाद श्रेष्ठ, प्रेमनारायण प्रेमी दाइहरूले रामेश, रायन र अरिम ओखलढुङ्गा हुँदादेखि नै माया गर्नुभएको थियो । पछि जब म रामेश, रायन र आरिमसँग सामेल भएँ त्यो बेला झन् ठूलो उत्साहले उहाँहरूले हाम्रो गीतको खेतलाई उर्वर बनाउनुभयो । उहाँहरूको महान् प्रेम मेरा लागि आज पनि उत्तिकै ठूलो प्रेरणा भएर रहेको छ यो छातीभित्र । मलाई गीतकार बनाउन उहाँहरूको ठूलो योगदान छ । साथी जसराज किराती- वाह ! उसले त मलाई गीत-लेखनको सप्तरङ्गी इन्द्रेनी नै दियो ।

त्यस्तै योगदान छ मेरो गीत-लेखनमा बहिनी सावित्री जोशीको, मेरो ठूलो मामा घनप्रसाद न्यौपानेको, मेरी प्यारी सानिमा र मेरा माइजूहरूको । म त एकदम साधारण मान्छे ! मायालु र प्रतिभाशाली मानिसहरूको महान् मायाले मलाई गीतकार बनायो- साधारण कि असाधारण कस्तो गीतकार बनायो त्यो चाहिँ मलाई थाहा छैन ।

सबैको मायाले मेरा शब्दहरू शक्तिशाली भए, जुझारु भए । गोरखबहादुर श्रेष्ठ, अँ, गोरखबहादुर श्रेष्ठको महान् माया र प्रेरणाले गर्दा म गीत लेख्ने मात्र होइन, गाउने पनि भएँ । गीत गाउने व्यक्तिले जब गीत लेख्छ त्यो गीत एकदम गीतिमय हुन्छ, शङ्कै छैन ।

हाम्रा प्रिय साथीहरू निरन सापकोटा, गणेश रसिक, विमल चापागाईं, निनु चापागाईं, राजेन्द्र कोइराला, दिव्य भुर्तेल, नोरेम निगेसा, खगेन्द्र बस्नेत, ओ के बोथ, केदार न्यौपाने- वाह ! यिनीहरूको मायाले हाम्रा गीतका हरफ हरफहरू निर्माण भएका छन् । रोयल नेपाल एकेडेमीको पद्य विभागले दिएको पैसा मेरो गीतिसङ्ग्रह छाप्न पर्याप्त भएन । त्यति बेला राजेन्द्र कोइरालाले नपुग पैसा पोखराबाट खुरुक्क नपठाइदिएको भए त्यति सजिलै कहाँ छापिन्थ्यो साइँलीमोरीलाई ! कहाँ त्यति सजिलै म त्यसको गीतकार हुन पाइहाल्थेँ मेरो अग्रज, मेरो दाजु रोचक घिमिरेले त्यो गीत सङ्ग्रह प्रकाशन गर्नका लागि प्रेमपूर्वक ठूलो यत्न नगरिदिनुभएको भए !

●

# स्त्रीहरू प्रेम भाग लगाउन र बाँड्न जान्दैनन्

## अम्बर गुरुङ

उनी संगीतबिनाको संसारको कल्पना गर्न सक्दैनन् । 'संगीत नसा हो, यसलाई छोड्न सकिँदैन । बरु रक्सी छोड्न सकिन्छ होला', उनले भने, 'कलाको नसा ज्यादै प्रभावकारी हुन्छ ।' 'ग्रामीण क्षेत्र होस्, कोलाहल नहोस्, छेउमा स-सानो डाँडा भए झन् राम्रो', उनी सिर्जनाका लागि उपयुक्त माहोलको कल्पना गर्न लागे । भलाकुसारी गर्न हामी उनको निवासमा पुग्दा उनी बैठक कोठामा एक्लै बसिरहेका थिए ।

उनी अरू कोही नभएर नेपालको सांगीतिक क्षेत्रका शिखर व्यक्तित्व लोकप्रिय संगीतकार अम्बर गुरुङ हुन् । 'रातो र चन्द्र सूर्य, पोखिएर घामको झुल्का, पोहोर साल खुसी फाट्दा, यो जिन्दगीको के कुरा'जस्ता दजनौं कालजयी गीतहरू तयार पारेर उनले नेपालीलाई कहिल्यै तिर्न नसक्ने ऋणको भागिदार बनाएका छन् । भर्खर तयार भएको नेपालको राष्ट्रिय गानसमेत उनकै संगीतमा सजिएको छ । संगीत, लेखन र गायन सबै क्षेत्रमा सफलता हासिल गरेका उनी हाल रिटायर्ड जीवन बिताइरहेका छन् । 'तर, कलाकारको दैनिक रुटिन हुँदैन । कलाकार रिटायर्ड हुन सक्दैन, बरु ऊ असक्षम हुन सक्छ', उनले भने । संगीत सिर्जनाका अलावा हाल उनी अध्ययनमा समेत व्यस्त छन् । पढ्ने उनको सानैदेखिको सौख हो । 'जीवनीमा कल्पनाभन्दा ज्यादा तथ्य हुन्छ, आख्यानमा विचारलाई कलात्मक ढंगले प्रस्तुत गरिएको हुन्छ । म फिक्सन ज्यादा रुचाउँछु ।' तर, विज्ञानसम्बन्धी लेखाइमा उनलाई कुनै रुचि छैन । विज्ञान उनका लागी 'डल' विषय हो । 'अथवा म आफैं डल भएको पनि हुन सक्छु', उनले भने ।

अम्बर गुरुङका सम्बन्धमा निबन्धकार शंकर लामिछानेले आफ्नो निबन्धहरूमा प्रसस्त स्थान दिएका छन् । एक निबन्धमा उनले लेखेका छन्, 'अम्बर स्वयंका रचनामा, जहाँ गीत, संगीत र स्वरको गोधुली संसार छ, त्यहाँ मलाई लाग्छ म रुन सफल भएको छु ।' भावको उत्कर्षमा व्यक्तिले आँसु झार्छ । लामिछानेको भनाइलाई आधार मान्ने हो भने भावनाको चरमबिन्दु स्पर्श गर्न गुरुङका सिर्जनाहरू सफल भएका छन् । 'तपाईंहरूले पनि शंकर दाइको निबन्ध पढ्नुभएको छ ?', लामिछानेको नाम सुन्नेबित्तिकै उत्साहित हुँदै उनले भने । उत्तरमा हामीले 'हो' को इसारामा टाउको हल्लायौं । उनले आफ्नो मन थाम्न सकेनन् र अतीत खोतल्न थाले । 'म, शंकर दाइ, भूपी शेरचन, अगमसिंह गिरी, हामीबीच घनिष्ट मित्रता थियो ।' आफूहरूबीचमा सबै कुरा खुलस्त हुने गरेको उनले बताए । 'उनीहरूको अभाव अहिलेसम्म मलाई खड्किरहेको छ', गम्भीर हुँदै उनले आफ्नो भनाइ राखे ।

अतीततर्फको उनको यात्रा यतिमै रोकिएन । लामिछानेलाई संकेत गर्दै उनले भने, 'उहाँ उच्च कोटीको साहित्यकार र चिन्तक हुनुहुन्थ्यो । हाम्रो भेट हुनेबित्तिकै त्यहाँ या त संगीत जन्मिन्थ्यो, या निबन्ध । तर, ती सिर्जनाहरू सुरक्षित रहन सकेनन् होला, त्यो फरक कुरा हो ।'

एकदिन लामिछानेले गुरुङलाई भनेका थिए रे, 'अम्बर, हामी दिवानापनको सिमानासम्म पुग्छौं र फर्की आउँछौं, त्यो हामीमा रहेको कलाकारको प्रवृत्ति हो ।' यसलाई लामिछानेले 'गोधुली संसार' नामक निबन्धसंग्रहमा उल्लेख गरेका छन् । 'शंकर दाइले त्यसो भनेको दिनलाई म अझै सम्झिन्छु', हामीले उनको मुहारमा रिक्तता छाएको अनुभव गर्‍यौं । तथापि, अतीत सम्झिँदै गर्दा उनको मुहारमा खुसीको मात्रा उत्ति नै थियो । 'त्यतिबेला हामी बौद्ध गएका थियौं । हामी रक्सी पिउँथ्यौं तर त्यसले हामीलाई उत्प्रेरणा र आनन्द प्रदान गर्थ्यो । हाम्रो पिउने क्रियामा संयमता थियो', उनले भने ।

बितेका ती सुनौला क्षणहरू उनी अझै सम्झिन्छन् । एकदिन भूपी शेरचनले गरेको ठट्टा उनले अझै बिर्सन सकेका छैनन् । 'नेता र जनताबीच किन यति धेरै दूरी कायम भएको होला भन्ने विषयमा हामीबीच कुराकानी चल्दै थियो ।' हाँस्दै उनले भने, 'यो नेपाली शिर उचाली' बोलको आफ्नै गीतलाई बिगार्दै भूपीले भनेको थियो, 'यो नेपाली शिर


तस्वीर: सुनिल शर्मा

झुकाई चाकरीमा लम्किन्छ ।' 'भूपीलाई ठट्टा गरिरहनुपर्थ्यो', उनको मुहारमा छाएको प्रशन्नता सोही अवस्थामा कायम भइरह्यो ।

कुनै गीत हात परेपछि त्यसलाई गाउन नसक्दा गुरुङ आफू रित्तिएको अनुभव गर्छन् । त्यतिबेला आफ्नो क्षमता नष्ट भएको आभास उनलाई हुन्छ । 'तर, उक्त रिक्तताभित्रको अचेतन अथवा अवचेतन तहमा आशा जीवन्त हुन्छ', उनले भने । संगीतले आनन्द दिन्छ भन्ने भनाइलाई उनी अस्वीकार गर्छन् । 'संगीतले आनन्द होइन, परमानन्द दिन्छ', रेडिमेड खैनी चेप्दै उनले भने ।

उनी भन्छन्, 'संगीत उत्पादन गर्न सकिने वस्तु होइन ।' संगीत सिर्जना गर्ने उनको आफ्नै शैली छ । कुनै गीत हात पारेपछि उनी त्यसलाई लगातार २-३ पटक अध्ययन गर्छन् । गीतको भाव बुझिसकेपछि उनी पात्र र गीत गाइने अवस्थाको कल्पना गर्छन् । 'त्यसका लागि म आफ्नो मुड तयार गर्छु । गीत प्रेमसँग सम्बन्धित छ भने त्यसका पनि धेरै अवस्था हुन सक्छन् । प्रेमिकासँग प्रेममा पर्ने समयमा गाइने, अथवा प्रेम भइसकेपछि छुट्टिने त्रासमा गाइने, अथवा विछोड भएपछि गाइने । कतिबेला, कहाँ बसेर गाउने गीत हो भन्नेबारे पनि म उत्ति नै सचेत हुन्छु । राति जून-तारा हेरेर गाउने गीत हो कि, दिउँसो खोलाको किनारमा बसेर गाउने गीत हो कि, अथवा साँझपख चौतारीमा बसेर गाउने गीत हो, यसले समेत संगीतको स्वरूपलाई निर्धारण गर्ने गर्छ । यो सब गरिसकेपछि संगीतको एउटा भावभूमि तयार हुन्छ । त्यसपछि म गीत गुनगुनाउन थाल्छु । गीतको धून आउन थालेपछि म त्यसलाई नोटेसन गर्छु र अन्त्यमा बाजासँग बस्छु', उनले भने ।

कला जीवनका लागि हुनुपर्छ भन्ने उनको मान्यता छ । अचेल जीवनसम्बन्धी बढी चिन्तन गर्न थालेको स्विकार्दै उनी भन्छन्, 'तर पनि चिन्तनको अन्त्यसम्म पुग्न सकेको छैन ।' 'विज्ञानले के बनाएन ?', हामीपट्टि फर्किंदै उनले प्रश्न गरे । 'उडिरहेको चरा देखेर हवाइजहाज बनायो, माछो देखेर पनडुब्बी बनायो, मानिस चन्द्रमासम्म मात्र होइन, मंगलग्रहसम्म पुग्यो । उसले सबथोक बनायो तर एउटा कमिला पनि बनाउन सकेन । त्यसैले मलाई जीवन धेरै मूल्यवान् लाग्न थालेको छ ।' कहिलेकाहीं जीवनको छोटो अवधि देखेर उनी आत्तिन्छन् । 'अमर हुने मेरो इच्छा होइन, अरूका लागि मरिदिनुपर्छ । पहिला-पहिला भोलि म पनि मर्छु भन्ने आभास हुँदैनथ्यो । अहिले आत्तिन्छु । गन्तव्य त टाढै छ जस्तो लाग्न थालेको छ', उनले माहोललाई एकाएक गम्भीर बनाए । आफू मरेपछि पुनः नेपालमै जन्मिन पाऊँ भन्ने उनको इच्छा छ । 'तर, त्यो नेपालका स्रोता र संगीतका



अमर हुने मेरो इच्छा होइन, अरूका लागि मरिदिनुपर्छ । पहिला-पहिला भोलि म पनि मर्छु भन्ने आभास हुँदैनथ्यो । अहिले आत्तिन्छु ।

विद्यार्थीहरू इमान्दार होऊन्', उनले भने ।

आफ्नो जीवन व्यर्थमा खर्चेजस्तो उनलाई लाग्दैन । 'करिब ९० वटा जति स्तरीय गीत तयार गरेको छु जस्तो लागेको छ । तर, सबैले मेरो सिर्जना मन पराउनै पर्छ भन्ने छैन', उनले भने । प्रविधिलाई उनी संगीतको विज्ञान बताउँछन् । 'हामीकहाँ गाउनुलाई मात्र विशेषज्ञता मानिन्छ । तर, गाउनुमात्र विशेषज्ञता होइन । हामीकहाँ अर्केस्ट्राको आवश्यकता छ । पहिले हार्मोनियममात्र थियो । अहिले पियानो पनि छ', उनले भने । गीत सुन्दा शब्द र संगीतमा एकैपटक बग्न सकियो भनेमात्र गीतबाट पूर्ण आनन्द प्राप्त गर्न सकिने उनी बताउँछन् । 'कोही गीत सुनेपछि जोडजोडले ताली बजाउँदथे । उनीहरू शब्द सुनेर उत्साहित भएका रहेछन्, संगीतपट्टि उनीहरूको ध्यानै गएको हुँदैनरहेछ', मुस्कुराउँदै उनले भनाइ राखे ।

भनिन्छ, अज्ञानतामा पूर्ण आनन्द लुकेको हुन्छ । गुरुङ संगीतका ज्ञाता मानिन्छन् । संगीतको आधारभूत ज्ञान पनि नभएको अम्बर गुरुङ र अहिलेको अम्बर गुरुङमध्ये कसले बढी संगीतको आनन्द लुट्न सक्छ होला भन्ने कौतूहल हामीमा थियो । 'निश्चय पनि अहिलेको अम्बर गुरुङले संगीतबाट बढी आनन्द लिन सक्छ । केही नजान्ने अम्बर गुरुङको संगीतसम्बन्धी ज्ञान सीमित हुन्छ । ऊ त्यो परिधिभित्र सीमित हुन्छ', आफूपट्टि औंल्याउँदै उनले भने, 'यो अम्बर गुरुङले त्यो परिधि नाघिसकेको छ ।'

आफू एकेडेमीमा काम गर्दा 'रातो र चन्द्र सूर्य' गीतको संगीत तयार पारेको उनी अझै सम्झिन्छन् । 'मैले १० मिनेटभित्र संगीत तयार पारेँ ।' त्यति राम्रो गीत नेपालमा लेखिएको छ जस्तो उनलाई लाग्दैन । 'तर, मैले गोपालप्रसाद रिमालसँग भेट्न पाइनँ', उनले भने । एकेडेमीमा रहँदा उनको हाइहाइ थियो । बालकृष्ण सम, केदारमान व्यथित, विजय मल्ल... सबैजना गुरुङको संगीतमा आफ्नो गीत रेकर्ड गराउन लालायित हुन्थे । 'अहिलेको संगीतमा पूर्व-पश्चिमको फ्युजन भएको छ, तर यसलाई म कन्फ्युजन भन्छु', हाँस्दै उनले आफ्नो भनाइ राखे ।

गुरुङले कम्पोज गरेको 'यो जिन्दगीको के कुरा' नामक गीत स्रोताले औधी रुचाएका छन् । गीतको बोल सुन्नासाथ उनी गुनगुनाउन थाले,

*'यो जिन्दगीको के कुरा*
*यो सपना हो र के कुरा*
*तिम्रो रूपको पनि के कुरा*
*मेरो गीतको पनि के कुरा ।'*

'ईश्वर बल्लभ र म सँगै भएको समयमा एक घण्टाभित्र यो गीत तयार भएको हो ।' एकै बसाइमा बल्लभले गीत लेखिसके, गुरुङले यसमा संगीत भरे । 'गीत निराशाजनक जस्तो देखिन्छ । गीतले जिन्दगीको अर्थ केही छैन भनेझैं लाग्छ । तर पनि यसको संगीतमा मैले रोमान्टिज्म भरिदिएको छु', सोफामा आसन परिवर्तन गर्दै उनले भने, 'यो गीत प्रेमीले प्रेमिकालाई जिस्काउन गाएको पनि हुन सक्छ ।'

प्रेमको कुरा आउनासाथ उनी उत्साहित भए । जीवनमा एकपटक मात्र प्रेम गरिन्छ भन्ने भनाइलाई उनी अस्वीकार गर्छन् । 'नेपोलियन हिलले 'कुन मुर्खले भन्छ कि प्रेम एकचोटि हुन्छ' भनेका छन् । मलाई उनको भनाइ ठीक लाग्छ', उनले भने । जीवनमा दुई-चार पटक प्रेममा परेको उनी स्वीकार गर्छन् । 'प्रत्येक पटक विछोड हुँदा म ज्यादै दुःखी भएको थिएँ । त्यतिबेला म हिरो थिएँ । धेरै केटीहरू मप्रति आकर्षित हुन्थे । स्टेजमा गाइसकेपछि धेरैजना अटोग्राफ लिन आउँथे', उनले हाँस्दै भने, 'तर अहिले त त्यसमा कुनै रस आउँदैन । केटीहरूसँग फोटो खिचाउँदा नातिनीसँग खिचाएजस्तै लाग्छ ।' त्योभन्दा धेरै आफ्नो प्रेमजीवनबारे चर्चा गर्न उनले चाहेनन् । 'अहिले यतिमात्र भन्छु, स्त्रीहरू प्रेम भाग लगाउन र बाँड्न जान्दैनन् ।' कुरा खुलाएर भन्न हामीले आग्रह गर्‍यौं । 'तपाईंहरूको विवाह भएको छ', हामीतर्फ संकेत गर्दै उनले भने । हाम्रो जवफ 'छैन' थियो । भलाकुसारी अन्त्य गर्दै उनले भने, 'त्यसो भए विवाह गरेपछि आफैं थाहा पाउनुहुनेछ ।' कुराकानी सकेर हामी बाहिर निस्कियौं । झरीको बाबजुद हामीलाई छोड्न उनी बाहिर गेटसम्म आइपुगे ।

***प्रस्तुतिः लिना चौलागाईं/सुजित मैनाली***

●



# महाकविको घर कन्तबिजोग

मैतीदेवी मन्दिरनजिकैको शास्त्रीमार्ग पुरानो टिनको ढोकामा ठोकिएर टुङ्गिन्छ र खुल्छ नेपाली साहित्यका अतुलनीय प्रतिभासम्पन्न व्यक्तित्व लक्ष्मीप्रसाद देवकोटा निवास अर्थात् कविकुञ्ज ।

पुरानै शैलीको तीनतले घरको झ्यालमा पेटीकोट, ब्लाउज, पाइन्ट, सर्ट सुकाइएका छन् । लहरै ज्याकेट, जुत्ता, मोजा र तुना पनि । आँगनमा दुईवटा पुराना ठेलागाडी छन् । ठेलागाडीका हावारहित पङ्ग्राहरू चुपचाप कविकुञ्जको 'आगमन दृश्य'लाई हेरिरहेका छन् ।

दोलखा निवासी गोपाल खड्का मैतीदेवी मन्दिर छेउछाउमा घुम्ती तरकारी पसल चलाउँछन् । उनकै गुजाराका सारथी हुन् कविकुञ्जको निगरानी गर्दै आँगनमा बसेका ठेलागाडी । गोपाललगायत अन्य दोलखावासी पनि कविकुञ्जमा भाडाको साइनो गाँसेर बसेका छन् । पुरानै शैलीको घर भएकाले आधुनिक कोठे मानसिकता नहुँदा त्यस भव्य घरमा जम्मा आठ कोठामात्र छन् । जसमध्ये ६ वटा भाडामा छन् । घरभरिका लागि एउटा शौचालय र पानीको तीन दिनपछिको पालोमा अभ्यस्त छन् कविकुञ्जवासीहरू...।

**पुरानै शैलीको तीनतले घरको झ्यालमा पेटीकोट, ब्लाउज, पाइन्ट, सर्ट सुकाइएका छन् । लहरै ज्याकेट, जुत्ता, मोजा र तुना पनि ।**

देशलाई चिनाउने भाषाले हो, संस्कृति र साहित्यले हो । महाकवि देवकोटा नेपालको भाषा र साहित्यका महान् हस्ती हुन् । देवकोटालाई नेपाली साहित्यका प्रतिबिम्ब मान्न सकिन्छ । तिनै महान् सर्जक महाकवि देवकोटाको निवास अहिले दुईचार पैसाको आम्दानीस्रोत बनेर एक्लो-एक्लो बाँचेको छ । अनेकौं प्रसिद्ध कृतिका जन्मदाता देवकोटाको कविकुञ्ज मुलककै केन्द्र मानिने पहुँचसम्पन्न राजधानीको छातीमा बसे पनि मुनामदनको वियोगान्त अन्त्यभन्दा दुःखलाग्दो अवस्थामा छ ।

देवकोटाको रूखमा फलेका लटरम्म उनका रचनाहरूको सजीवता जति हामी नेपालीको मानसपटलमा छ त्योभन्दा सजीव कारुणिक दृश्य अहिलेको कविकुञ्जमा देख्न सकिन्छ । टाढाका दरोक समालोचकहरू यसलाई देवकोटा परिवारको दोष भनी आफ्नो दृष्टिदोष लिप्छन् र हराउँछन् अनि औपचारिकताको कृत्रिमतामा देवकोटा सम्झिने बाहनामा उनको कृतिको गहिराइदेखि भयभित समालोचकहरू लक्ष्मीपूजाको दिन कविकुञ्जको विषयमा भरपूर असहमति र विरोध देखाउँछन् तर तथ्यभित्रको सत्य कुरा अर्कै छ ।

भनिन्छ यो कविकुञ्ज मीरा देवकोटा (देवकोटाकी छोरी) को आयस्रोतको एक्लो माध्यम । त्यसैले यो हविगत भइरहेको । एकजनाको आवश्यकतालाई सम्मानसाथ पूर्ति गरिदिनसक्ने यो समाजमा कोही छैनन् वा कुनै षड्यन्त्र छ यस माझमा कसैलाई आउन नदिने ।

साहित्यका पारखी सबैलाई कविकुञ्ज एउटा कठोर व्यङ्ग हो । सरकारले क्षमता भईकन पनि उचित ध्यान दिन नसक्नु विवेकहीनताको सूचक हो ।

सम्मानको संस्कृति आवश्यक कुरा हो, देवकोटा सबैका साझा विभूति हुन् । उनको सम्झनामा उनको रचनाकालमा सँगै बाँचेका भुँइ, भित्ता र आँगनलाई संरक्षण गर्नु हामी सबै पाठकको दायित्व हो ।











महाकविनिवास 'कविकुञ्ज'को सामयिक दृश्यहरू



# देवकोटा परिवार सधैं उदार छ

– महाकविपुत्र प्रा.डा. पद्मप्रसाद देवकोटा

महाकविको घरमात्र होइन महाकविसम्बन्धी सबै विषयमा देवकोटा परिवार सधैं उदार छ । विषेशगरी घरका सम्बन्धमा चासो लिने त धेरै छन् । यस्तो गर्नुपर्छ, उस्तो गर्नुपर्छ भन्ने पनि धेरै भेटिए । तर, 'लौ यसो गरौं न त !' भनी अघि सर्ने चाहिँ कोही छैनन् । वास्तविकता नै नबुझी, असंवेदनशील भएर देवकोटा परिवारमाथि कतिपयले निराधार लाञ्छनासमेत लगाएका छन् ।

देवकोटा परिवार सधैं यो घरको संरक्षणका लागि केही गहकिलो काम होस् भन्ने चाहन्छ । उचित योजनाका साथ कोही आउँछ भने हामी पूर्ण सहयोग प्रदान गर्नेछौं । विगतमा पनि घरको संरक्षणको सम्बन्धमा कार्ययोजनाहरू त बनेका थिए, तर तिनले मूर्तरूप लिन सकेनन् । एकपटक सरकारले यो घर खरिद गरेर त्यसलाई संग्रहालयमा परिणत गर्न केही रकमसमेत छुट्याएको हामीलाई जानकारी प्राप्त भएको थियो । पछि गएर सरकारले आफ्नो धारणा बदल्यो । तात्कालीन एक सचिवले त कसैको निजी घरजग्गा खरिद गर्नु सरकारको काम नभएको समेत बताए ।

महाकविको घरको विषयमा कुनै पनि धारणा बनाउनुपूर्व सबैले केही कुरा बुझ्नु आवश्यक छ । यो घर मेरो नाउँमा छैन । यो मेरी दिदीको भागमा परेको छ, जसकारण चाहेर पनि मैले घरको संरक्षणको विषयमा आफ्नो मनखुसी गर्न सक्तिनँ । दिदीका पनि आफ्नै समस्या छन् । उहाँ अविवाहित हुनुहुन्छ । यो घरको भाडाबाट प्राप्त रकम उहाँको गुजाराको एकमात्र स्रोत हो ।

घरको सम्बन्धमा अर्को जटिलता पनि छ । यो गुठीअन्तर्गत छ । गुठीको नियमअनुसार यो घर बिक्री भएमा दिदीले मोहीको हैसियतले बिक्री भएको रकमको पच्चीस प्रतिशतमात्र प्राप्त गर्नु हुनेछ । यो स्थिति रहेसम्म सो घर बेच्नका निमित्त दिदीलाई हामी पनि दबाब दिन सक्तैनौं । दिदीको वर्तमान तथा भविष्य यही घरबाट हुने आम्दानीसँग जोडिएको छ । समस्याको समाधान भनेको यसलाई रैकरमा लानु हो, जसका लागि आठ-दस लाख रूपैयाँ सुरुमै आवश्यक पर्नेछ ।

यी वास्तविकताहरूलाई मनन् गरेर दीर्घकालीन तथा सार्थक योजनाका साथ सरकार, व्यक्ति वा संस्था जोकोही आए पनि देवकोटा परिवारले उहाँहरूलाई सधैं स्वागत गर्नेछ । म, देवकोटाको पुत्र तथा महाकवि लक्ष्मीप्रसाद देवकोटा अध्ययन प्रतिष्ठानको अध्यक्षको हैसियतले यथासक्य सहयोग गर्ने प्रतिबद्धता व्यक्त गर्दछु ।

# शकुन्तला गीत

आज आए राजा दुष्यन्त सेनाहरू पछिपछि लिएर ।
वनमा मृगको शिकार गर्न दुई घोडाको रथमा सवार भएर ॥
उता निर्झर झरेको झरना झरझर यता रथको घरघर ।
हावाले ठोक्किएर हल्लिएको फूलहरू सरी उनको वस्त्रहरू भए फरफर ॥
पंक्षीहरूको चिरविरले र भँवराहरुले वन नै भयो गुञ्जित ।
कोइली गाएको सुनिन्छ उता लहरहरूको मण्डपभित्र ।
पशुहरू यताउता नृत्य गरिरहेका थिए भर्खर ।
वाणको प्रहारको आवाज सुनेर झटपट भागे भएर भयभित ।

●●●

ऋषिकुमारः राजन् ! वाणहरू प्रहार नगरिबक्स्योस् ।
पशुहरूको ज्यान यहाँ नलिइबक्स्योस् ।
दुष्यन्तः ऋषिपुत्रहरू । दुष्यन्तको कार्यमा किन बाधा गरेको
आएर तिमीहरू ।
ऋषिकुमारः यहाँका सवै मृगहरू हुन् यसै आश्रमका
ऋषि कण्वयाको आदेश छ के गरूँ ।
दुष्यन्तः त्यसो भए तिमीहरू ऋषिपुत्रहरू
पीर नलिनू, म ज्यान लिन्न तिनीहरूको ।
ऋषिकुमारः राजन् एकपटक हाम्रो आश्रममा सवारी होस्
अनि विश्राम गरेर आसनलाई धन्य गरिबक्स्योस् ।
हजुरको हामी संकेतको सेवा गर्छौं ।
भएको फलफूलको भोजन गराउँछौं ।

●●●

प्रियंवदाः देऊ न देऊ, पानी देऊ यसमा अझ धेरै
पितालाई यी फूलहरू प्रिय छन् हामीभन्दा धेरै ।
अनुसुयाः पिताले नत्र किन दिनुहुन्थ्यो । हामीलाई यो काम नित्य
हो सखी हो, उहाँलाई यी प्रिय छन् असाध्य ।
शकुन्तलाः पिताको आज्ञाले होइन पानी दिएको
मलाई पनि माधवीका फूलहरू साह्रै मन परेको ।
प्रियवदाः सुखी हेर न शकुन्तलाको यौवन फूलजस्तै फक्रिएको
त्यो सौन्दर्य रूप-पुष्पले हेर सुन्दर सुगन्ध फैलिएको ।
अनुसुयाः देखेकी छु नि लहरा र वृक्षको मिलन भएको हेर
मुसुक्क हाँसेर, लजाएर उतातिर/अन्तैतिर हेर्ने ।
शकुन्तलाः मन पर्दैन मलाई
तिमीहरूले मलाई यसरी
सुनाएको यसको चाला
नजिस्काऊ है तिमीबरु मलाई हरेक दिन यस्तरी ।
पियवंदाः हैन, ल भन त आकांक्षा हैन तिम्रो लहराजस्तै गरी
गर्न पाऊँ कुनै दिन स्वयंवर भनी ।
शकुन्तलाः कति दुःख दिएको यो भँवराले पनि हेर सखी
भुनुभुनु गरी आइरहन्छ यो मतिर घडीघडी ।
प्रियंवदाः तिम्रा नयनहरू नै कमलजस्ता लाग्छन् त तिनलाई
त धपाउन पनि कसरी सक्छौ र हामी पनि तिनलाई ।
शकुन्तलाः भएन भने भएन हेर न सखी साँच्ची
झन् यो त आयो हेर मुहारमै बस्लाजस्तै गरी ।
अनुसुयाः गुहार-गुहार हे राजन् !
हामी सखीको रक्षा गर्नुपर्‍यो प्रभु हजुरले ।
दुष्यन्तः अवलालाई दिएर दुःख कष्ट
आफ्नो प्राण गुमाउन आयो को यो दुष्ट
भन हे भन कन्याहरू तिमीहरूले म तिमीहरूको भय हरण
गरिदिन्छु अविलम्व ।
दुष्यन्तः को हुन् यिनी, कति सुन्दर रूप यिनको
वनदेवी पो आएकी हुन् कि, यहाँतिर ?
राजाको महलभित्रै दुर्लभ
यस्तो अद्वितीय रूप आएको कहाँबाट सुन्दरताको ।
अनुसुयाः भित्र पाल्नूस् महासय, आश्रममा
यसको पूर्ण यथार्थ वर्णन गर्छु हजुरलाई ।
अनुसुयाः सखी यो शकुनतलाको मुहार किन यस्तो मलिन
सतायो कसको मायाले यसलाई ।
प्रियवंदाः हो हो, मैले पनि महसुस गरेकी छु, कस्तो दुब्ली हुँदै गएकी ।
अनि कस्तो गालाहरू पनि यसरी सुक्दै गएको ।
शकुन्तलाः त्यो भँवरा मुहारमै आएर बसेकै दिन
त्यहाँ आएको सुन्दर युवकलाई देखेपछि किन हो वशमा
भएन मेरो मन
भन्नै सक्दिन म, किन रोएको मेरो मन झन् ।
दुष्यन्तः जाऊँ त जाउँ कसरी फर्केर यहाँबाट ?
स्मृतिमा त्यो सुन्दरीलाई राखेर
उसको मुहारमात्र आँखासामु नाचिरहन्छ
जाऊँ म कसरी आफ्नो महल फर्केर ।
माराव्बः सधैं मिठोमिठो मात्रै खाइबक्यो भने राजन कहिलेकाहीं
अमिलो स्वाद पनि,
मन पर्न सक्छ आफ्नो महलभरी सुन्दरीहरू भएर पनि,
कसरी वनको कन्यामा झुलेको मन पनि ।
दुष्यन्तः भर्खर फक्रन लागेको गुलाफ भनूँ कि
रस भरिएको मिठो फल भनूँ कि ।
के भनूँ उसको मुहारलाई
लाग्छ जूनलाई पनि लाग्ला लाज देखेर उनलाई ।
माराब्बः तिनी सुन्दर छिन् अप्सराजस्तै छिन्,
हजुरलाई मन परेर के गर्ने
उनलाई हजुर मन परेन भने
कसरी हुजुरको सपना पूरा हुने ?
दृष्यन्तः हैन मित्र, तिनी पनि मनपराउँछिन् मलाई
मेरा कुराहरू मनलगाएर सुन्छिन्
अनि मैले हेरिरहेको बेला मलाई नहेरीकन मुन्टो झुकाएर बस्छिन् ।
शकुन्तलाः कति रुवाउँछौ प्रियतम् स्वामी आफ्नो दासीलाई यस वनमा
अर्पण गरीसकें मेरो जीवन मनमनै हजुरको चरणमा
बलिरहेको छ आगो विरहको पलपल यो मनमा ।
दृष्यन्तः त्यो आगो तिम्रो मनमा त बलिरहेको मात्र छ
मेरो मनमा त विरहको आगो बलिसकेर खरानीमात्र बाँकी छ ।

**(नेपाल भाषाबाट अनुवादित**
**अनुवादः सचेन मानन्धर)**

- मेनुका ढकाल

# सेयर बजार

नेपालको सेयर बजारको इतिहास त्यति लामो छैन सर्वप्रथम सर्वसाधारणबाट पुँजी संकलन गरी सेयर निष्कासन गर्ने कार्य विराटनगर जुट मिलले गरेको हो। वि.सं. २०५० सालमा आएर नेपाल स्टक एक्सचेन्ज लिमिटेडले औपचारिक रूपमा यसको कारोबार सुरुवात गरी धितोपत्र दलाल, बजार निर्मातामार्फत प्रतिस्पर्धाको आधारमा धितोपत्र खरिद विक्री कार्यलाई अगाडि बढाएको देखिन्छ। सुरुवातमा २५ जना धितोपत्र दलाल र पाँच जना बजार निर्माता थिए। पछि गएर सात जना धितोपत्र दलाल, एक जना बजार निर्माता थपिएर ३२ जना धितोपत्र दलाल, ६ जना बजार निर्माता थपिएका थिए भने हाल सक्रिय रूपमा २३ जना धितोपत्र दलालहरूले मात्र यस कार्यलाई निरन्तरता दिएका छन्। बजार निर्माताहरू भने निश्क्रिय अवस्थामा छन्।

पुँजी बजारको नियमित अनुगमन लगानीकर्ताको हकहितको संरक्षण कम्पनी नेपाल धितोपत्र बोर्डको स्थापना भएको हो। नेपाल स्टक एक्सचेन्जमा हालसम्ममा लगभग एक सय ४८ कम्पनी सूचीकरण हाराहारीमा पुगेको छ। हालका दिनहरूमा सेयर बजारमा आएको उतार चढाबले केही तलमाथि भएको छ। नेपाल स्टक एक्सचेन्जमा सूचिकृत कम्पनीहरू बैकिङ तथा वित्तीय व्यापार समूह, विमा समूह र अन्य समूहमा (नेपाल चलचित्र विकास, नेपाल दूर सञ्चार संस्थान लिमिटेड) गरी जम्मा सात समूहमा विभाजित छन्। धितोपत्रबोर्डबाट इजाजत प्राप्त निष्कासन तथा बिक्री प्रबर्द्धक कम्पनीहरू १२ वटा रहेका छन्। यसबीचमा पटक-पटक गरी सूचीकरण खारेजी गरिएका कम्पनीहरू पनि रहेका छन्। सुरुवातको अवस्थामा सेयर बजारमा थोरै मात्र लगानी कर्ताहरू थिए। केही समययता आएर सबै वर्गमा सेयर बजारको आक्रर्षण बढ्दो देखिन्छ। विद्यार्थी वर्गदेखि अवकास प्राप्त गर्नेहरूसम्मले यो क्षेत्रमा चासो देखाउन थालेका छन्। यो चासो बढ्नुमा केही समययता नेपाल कृषि विकास बैंक, नेपाल दूर सञ्चार संस्थान लिमिटेडले सर्वसाधारणको लागि सेयर निश्कासन गर्नु हो। बैंक तथा वित्तीय संस्थाले ७० प्रतिशत सेयर ओगटेको छ भने सर्वसाधारणहरू बैंकको सेयरतर्फ आकर्षित भएको देखिन्छ। केही समययता सम्मसेयरको नाम पनि थाहा नपाउनेहरू हाल आएर सेयर बजारमा लगानी गर्न आतुर रहेका छन्। केही हल्लाको भरमा यो क्षेत्रमा आएका छन् भने कोही अध्ययन तथा विश्लेषण गरेर आएका छन्।

हल्लाले सेयर बजारमा ठूलो प्रभाव पार्दछ। सेयर बजारमा आकर्षण बढ्नुका विविध कारणहरू मध्ये बैंकहरूले दुई अर्ब पुँजी पुऱ्याउनुपर्ने राष्ट्र बैंकको निर्णय पनि मुख्य हुन सक्छ। वि.सं. २०६० सम्ममा यो क्षेत्रमा लगानीकर्ताहरूको राम्रो अवसर रहेको विश्लेषकहरूको अनुमानले गर्दा पनि यो क्षेत्रमा लगानीकर्ताहरूको आकर्षण बढ्दो रहेको छ। यो बजार अत्यन्त संवेदनशील बजार हो। जसमा सोचविचार गरेर अगाडि बढ्यो भने धन कमाउने राम्रो ठाउँ हो। हल्लाको भरमा लगानी गऱ्यो भने जुवा समान पनि हुने बजार हो। धेरैले यो बजारमा करोडौं कमाएका छन् भने कतिले गुमाएका पनि छन्।

यो बजारमा विगत र भविष्यलाई सोचेर अगाडि बढ्यो भने घाटा खानुपर्दैन। यसका लागि सहयोगीको रूपमा सेयर दलाल कम्पनीको वार्षिक प्रतिवेदन, व्यवस्थापन पक्ष, सञ्चालन पक्ष, सूचना प्राप्त गर्ने माध्यम हो भने कम्पनीको पीई रेसियो नेटवर्क वास्तविक मूल्यलाई आधार मानेर सेयर खरिद गरेमा घाटा खानुपर्दैन। हाल आएर विश्वव्यापी मन्दिलाई पछ्याउँदै नेपालको सेयर बजारमा पनि केही उतार-चढाब आएको छ। हालका दिनहरूमा सेयर बजार तलतिर जाने क्रमले गर्दा लगानीकर्ताहरूमा निराशा देखिएको। तर, लगानीकर्ता अझै तल झर्ने होकि भनेर आफ्नो सेयर विक्री गर्ने क्रममा छन् भने केही होल्ड गर्ने निर्णयमा छन्। तर, नयाँ लगानीकर्ताहरूको लागि उच्च मूल्यका सेयर हालका दिनहरूमा न्यून मूल्य रहेकाले नयाँ लगानीकर्ताहरूका लागि उपयुक्त समय रहेको अनुमान छ।

menukadhakal@ ymail.com

–शैलेन्द्र साकार



# शब्दजरा संस्मरणात्मक उपन्यास

**समयको यत्रो अन्तरालमा अहिले आएर आफू जन्मेको ठाउँ र आफू जन्मेको समयलाई लेख्दा भोलि यसले पार्ने असरका बारेमा पनि म सचेत हुनै पर्छ । यस्तो केही पनि विशेष कुरा छैन जसलाई लेख्न मैले चारपल्ट सोच्न परोस् । अथवा झुठो व्यख्याको सहारा लिनु परोस् । यो त्यस्तो महापुरुषको जीवन चरित्र होइन कि भोलिको पुस्ताले यसबाट असल पाठमात्र सिकोस् र समाजले निरन्तर प्रेरणा प्राप्त गरोस् ।**

६० वर्ष लागिसकेपछि मलाई पछिल्तिर फर्केर बितेका वर्षहरू हेर्ने विचार बारम्बार आउन थालेको छ । आफूले पार गरेर आएका यतिका वर्षहरू र त्यसभित्र लुकेर रहेका जीवनका रमाइला, नरमाइला, सुखद्, दुखद् घटना क्रमहरूलाई सम्झन मन लागेको निकै दिन बितिसक्यो । साथीभाइसँग गफगाफमा या कतै अन्तर कतै अन्तरङ भेटघाट हुँदा वा कतै साहित्यिक चर्चा/परिचर्चामा अकस्मात आफूले बिताएका बालक समयका सम्बन्ध केही भन्ने बानी कुनै नौलो होइन । यसबाट आफ्नो कुरालाई पुष्टि मिलेको अथवा घटित कथालाई औचित्यपूर्ण ठहर पर्ने आफ्नो प्रयास सफल भएको आभास पनि आफूलाई मिलेको छ । यसबाट आफूलाई मात्र होइन सुन्ने जसलाई पनि सत्यको नजिक पुगेको जस्तो अनुभव हुने गरेको छ ।...

मानिस आफूभित्र कहींकतै अतीतजीवी हुन्छ नै, तर आफ्ना जीवनका पूर्व कथाहरू त्यति रोमाञ्चक ऐतिहासिक र महत्वपूर्ण नलागे पनि आत्मकथा जस्तो कुनै कथा लेख्न खासै इच्छा उत्पन्न हुन सकेको थिएन । तर, जिज्ञासु मित्रहरूको चाहना र बित्दै गएको उमेर सँगसँगै आफूले बिताएको क्षणलाई अरूसँग बाड्ने स्वभाविक उत्साह गर्दा मलाई पनि आफ्नो जीवनको प्रारम्भिक क्षणलाई आत्मकथाको भूमिकाका रूपमा केही लेख्ने जाँगर बढ्दै आइरहको छ । यद्यपि मेरा कैयौं कथाहरूमा ज्ञात/अज्ञात व्यक्तिहरू पनि अनायास हाम्फालेर आउने कुरालाई म नकार्न सक्दिन ।

मेरा पूर्व प्रकाशित कथा सङ्ग्रह 'रामायण र अरू कथाहरू' मा व्यक्त घटनाहरू, पस्किएका चरित्रहरू र त्यो परिवेश सम्पूर्ण रूपले मेरो 'जरा' हो । म जन्मेको ठाउँको चित्रण हो । त्यहाँको ढुङ्गा, गुफा, सानो बजार, जोगीहरू, गरिब पसलेहरू, भट्टीहरू, स्त्री र सम्पूर्ण रूपले मैले बालककालमा देखेको, भोगेको परिवेश र घटनाक्रम हो । ती चरित्र कुनै न कुनै प्रकारले मेरो जीवनसँग गाँसिएका जीवन्त र यथार्थ पात्रहरू हुन् । जस्तो कि मेरा दाजु कथाकार परशु प्रधानले कथा रचना गर्न कथा लेखन पूर्वको क्षणलाई सम्झँदै वास्तविक रूपमा वर्णन गरेर पुस्तक नै लेख्नु भएको छ ।

हुन सक्छ म उक्त पुस्तकबाट पनि कुनैकुनै रूपमा प्रभावित भएको होऊँ । यसरी आफू बाँचिसकेको, भोगिसकेको, घटनालाई कुनै न कुनै रूपमा एउटा इमान्दार लेखकले आफ्नो रचनामा अभिव्यक्त गरी नै सकेको हुन्छ । काल्पनिक पात्रको आवरणभित्र पनि कुनै न कुनै रूपमा उसले आफ्नो छविलाई त्यसभित्र हेर्ने कोसिस पनि गरेकै हुन्छ भने यो बालक बाललाई फेरि आफूभित्र बाचाउने प्रयत्न मलाई किन मन लाग्दो होला ? यो प्रश्न पनि बारम्बार मभित्र उठिरहेछ । म आफूले लेख्नुपर्ने वाध्यताजस्तो कुनै खास कारण त खोजिरहेको छैन ? आफ्ना कुराहरू लेख्नुलाई वाध्यताका रूपमा लिन हुन्न भन्ने मलाई लाग्छ । त्यसैले पनि आफूलाई व्यक्त गर्न पाउने कुनै पनि माध्यम मेरा लागि एकदमै प्रिय छ ।

केही वर्ष लेखक मित्र डा. धुव्रचन्द्रले आफ्ना आत्मकथालाई चेतचन्द्र उपनामको माध्यमबाट नेपाली साहित्य जगत्मा ल्याइसकेकै हुन् । त्यसका केही अंशहरू उनकै मुखवाट कैयौंपल्ट सुनिसकेको पनि हुँ । त्यसका कही अनुच्छेदहरू मलाई राम्रा लागे पनि त्यसमा कहींकतै इमान्दारीपनको कमी त छैन भन्ने आशङ्काबाट कैयौपल्ट म आफैं ग्रसित पनि भएकै हुँ । अर्का मित्र युयुत्सले त उनका सम्पूर्ण लेखन र प्रख्यात उपन्यासमाथि नै प्रश्नचिह्नहरू खडा गर्न थालेपछि त्यसबाट अप्रभावित पनि रहन सकिएन । त्यसैले बीचबीचमा डाक्टरलाई व्यङ्ग्य गर्दै त्यस्तै नक्कली आत्मकथा लेखौं त भनेर माहान् लेखक हुनुको आत्मरतिमा बाँच्न खोजे पनि त्यो केवल समय बिताउने एउटा निरिह प्रयत्नमात्रै लागि रहेको कुरा मलै मान्ने पर्छ । आफूसँग भन्नलाई केही छ भने कुनै न कुनै रूपमा कुनै न कुनै माध्यमबाट व्यक्त गर्नु नै पर्दछ । चुप लागेर अथवा बेलाकुबेला व्यङ्ग्य गरेर मात्र त हुँदैन ।

समयको यत्रो अन्तरालमा अहिले आएर आफू जन्मेको ठाउँ र आफू जन्मेको समयलाई लेख्दा भोलि यसले पार्ने असरका बारेमा पनि म सचेत हुनै पर्छ । यस्तो केही पनि विशेष कुरा छैन जसलाई लेख्न मैले चारपल्ट सोच्न परोस् । अथवा झुठो व्यख्याको सहारा लिनु परोस् । यो त्यस्तो महापुरुषको जीवन चरित्र होइन कि भोलिको पुस्ताले यसबाट असल पाठमात्र सिकोस् र समाजले निरन्तर प्रेरणा प्राप्त गरोस् ।

मैले आफ्नो जीवान जसरी बिताए त्यसको पूर्वानुमान अलिकति पनि थिएन । कसैको जीवन पनि पहिले घोषित भविश्यवाणीका आधारमा व्यतीत भएको पनि हुँदैन । यस्तो भन्दा अझ मलाई आफूले बिताएको बालकपन एक प्रकारले अस्पष्ट, सपनामा बिताएको जस्तो र अमूर्त जस्तो लाग्न थालिरहेछ ।

जुन चित्र मेरो आँखाको सामुन्ने उत्रिरहेछ त्यो चित्र एकदम अस्पष्ट र धमिलो त छ नै एक प्रकारले अविश्वसनीय पनि लागिरहेछ । हिजो जस्तो मात्र लाग्ने त्यो सोझो बालकको कथाले ६० वर्ष पूरा गरिसकेको सम्झँदा पनि छक्क लाग्ने रहेछ । मैले चिनेका कैयौं स्वनामधन्य कवि, कथाकार समग्रमा साहित्यकारहरू यो उमेरसम्ममा स्वर्गीय भै सकेका थिए र यस अर्थमा म आफूलाई भाग्यमानी ठान्छु । मैले थाहा पाएका यस्ता अग्रज, दौंतरी र भाइबहिनीहरू धेरै छन् जसले जीवनको ६० वर्ष बिताउन सकेनन् । षष्ठी समारोह मनाउन पाएनन् ।

आफूसँग अपरिचित तर साहित्य जगत्मा कमाएको ख्यातिले एकदमै परिचित महान् प्रतिभाहरू मोतीराम भट्ट, लक्ष्मीप्रसाद देवकोटाले ३० वर्ष र ५० वर्षमा नै यस संसारलाई अतुलनीय योगदान दिएर गएका हुन् । अरू पनि यस्ता कैयौं महान् प्रतिभाहरू छन् जसबाट म पूर्ण परिचित र प्रभावित पनि थिएँ ।

उनीहरूको साहित्यिक योगदानप्रति सिङ्गो नेपाल नै परिचित छ र मैले नाम लिनासाथ उनीहरूलाई नेपाली साहित्यका साधारणभन्दा साधारण पाठकले पनि चिन्नेछन् । त्यस्ता व्यक्तिहरूमा म सर्वप्रथम पारिजात दिदी (५५-५६वर्ष) भूपि शेरचन (५५-५६ वर्ष) वासुशशी (५५-५६ वर्ष) हरिभक्त कटुवाल (५० वर्ष) कुमुद देवकोटा (५० वर्ष) जीवन आचार्य (३०-३१ वर्ष) पोषण पाण्डे (५५-५६ वर्ष ) विष्णु नवीन (५०-५१ वर्ष) जस्ता नामहरू लिन चाहन्छु ।

*(शैलेन्द्र साकारको उपन्यास 'शब्दजरा' आगामी अंकमा क्रमशः प्रकाशन गरिनेछ । -सं.)*

●

- रमेश पाण्डे

# आदर्श शिक्षासेवीको आत्ममिमांशा



जिन्दगीका ३८ हिउँदवर्षा मैले शिक्षण पेसामा बिताएँ । यो पेसामा कसैको चाकरी गर्नुपर्दैन, कसैसँग सम्झौता गर्नुपर्दैन, त्यसैले मैले यो पेसा रोजेँ । यो पेसाले मलाई सधैँ स्वतन्त्र रहन दियो । एउटा शिक्षकका रूपमा मैले कहिल्यै पनि स्वविवेक र अन्तरआत्माको आवाजलाई बेवास्ता गर्न र सत्यको साथ छाड्नुपरेन ।

त्रिचन्द्र कलेज, नेपाल कमर्स क्याम्पस, शङ्करदेवदेखि लिएर काठमाडौं विश्वविद्यालयको एउटा सेमेस्टर र हाल कलेज अफ अप्लाइड बिजनेससम्म आइपुग्दा मैले २०-२२ हजार विद्यार्थीलाई पढाए हुँला । मेरा विद्यार्थीका लागि म कहिले अभिभावक, कहिले साथी, कहिले पथप्रदर्शक त कहिले निरीक्षक बनेँ । यी सबै भूमिकामा मैले सधैँ अधिकतम र कमजोर विद्यार्थीका लागि लडेको छु, मैले तिनलाई गर्नसक्ने जति न्याय गर्ने प्रयास गरेको छु । मेरो कक्षा लिन आउने विद्यार्थीलाई मैले कहिल्यै छुट्टै ट्युसन पढाइनँ । उनीहरूका लागि म चौबीसै घन्टा उपलब्ध हुन्थेँ, टेलिफोनमा, बाटोमा, चियापसलमा । मलाई जहाँ भेटेर भए पनि विद्यार्थीले आफ्ना प्रश्न र समस्या राख्थे ।

मेरो जीवनमा अभावहरू नभएका होइनन् । कठिनाइ अवश्य थियो । तर, श्रीमतीको र मेरो इमानदार कमाइले हामीलाई व्यवहार धान्न पुगेकै थियो । आफ्नो विश्वास बेचेर मैले विद्यार्थीमाथि अन्याय गर्न चाहिनँ । ट्युसन पढाउनतिर लाग्दा टाढा-टाढाबाट आएर क्याम्पसको कोठामा, बेन्चमा, डेस्कमा, भुइँमा, झ्यालमा बसेर र उभिएरै पनि मेरो कक्षा लिन चाहने विद्यार्थीमाथि मैले अन्याय गर्न सक्दिनथेँ । आश र त्रासले मान्छेलाई सम्झौता गर्न, झुट बोल्न र झुक्न बाध्य पार्छ । आश र त्रास राखेको भए म पनि रजिस्ट्रार, रेक्टरजस्ता पदमा पुऱ्याइन्थेँ होला । तर, मलाई कहिल्यै त्यो चाह भएन । विद्यार्थीको सफलतालाई नै मैले आफ्नो सफलता र उनीहरूको असफलता आफ्नो असफलता मान्दै झन्डै चार दशक बिताएँ । मेरो शैक्षिक जीवनको ७५ प्रतिशतभन्दा बढी हिस्सा शङ्करदेव क्याम्पसमा बित्यो । मेरो कक्षा धेरैजसो बिहानी सत्रको पहिलो पिरियड हुन्थ्यो । प्रायःजसो सवा ६ बजे सुरु हुने मेरो कक्षामा सवा ६, ठीक सवा ६ बजे नै बज्थ्यो, न एक मिनेट छिटो न त एक मिनेट ढिलो नै । मेरा लागि सबैभन्दा ठूलो कुरा मेरो कक्षा नै हुन्थ्यो । मलाई कहिल्यै पनि हुरीपानीले कक्षामा पुग्न छेकेन । ४६ सालको आन्दोलनमा चैत २४ गतेदेखि कर्फ्यु लाग्यो । २३ गतेका दिन बाहिर गोली चलिरहँदा भित्र म कक्षा लिइरहेको थिएँ । ३८ वर्ष पढाउँदा पढाइ भएकाबखत मुस्किलले ३८ दिन कक्षामा अनुपस्थित भए हुँला, आँखाको शल्यक्रिया या अरू कुनै आकस्मिकताका कारण । २०६२ सालमा आँखामा मोतियाबिन्दुको शल्यक्रिया गरेको बखत तीन दिन बिदा बसेँ । खासमा शल्यक्रिया पनि बिदाकै बेला पारेको थिएँ । तर पनि तीन दिन कक्षा नै छाड्नुपऱ्यो । त्यति धेरै समय लगातार बिदामा पहिले कहिल्यै बसेको थिइनँ, पछि पनि बसिनँ । कुनै दिन शरीर आलस्य र काम गर्न कठिन भयो होला, तर कक्षा लिने सवालमा ती कुरा कहिल्यै बाधक बनेनन् । सायद कक्षाप्रतिको आशक्ति र अनुशासन चेतनाले त्यस्तो भयो होला ।

अनुशासनको घेराले जिन्दगीलाई एउटा आकार दिन्छ, निश्चितता दिन्छ र गर्व गर्ने आधार दिन्छ । अनुशासनमा चुकियो भने जीवनका अन्य पक्षमा पनि चुकिन्छ । मैले आत्मसात् गरेको अनुशासनको घेराले मेरो जिन्दगी सार्थक बनेको छ भन्ने ठान्छु ।

मेरो पेसागत एवं पारिवारिक मूल्य र मान्यता एकआपसमा बाझ्दा धेरै अप्ठ्यारा क्षणहरू पनि आएका छन् । २०२९-३० सालतिरको कुरा हो, मेरी आफ्नै दिदी गर्भवती हुनुहुन्थ्यो । उहाँले बीकमको जाँच दिनुपर्ने थियो । प्रश्नपत्र मैले नै सेट गरेको थिएँ । तर, मैले 'दिदी, यी-यी प्रश्नहरू महत्वपूर्ण छन्, तयारी गर' भन्न सकिनँ । उहाँ फेल हुनुभयो । यही घटना फेरि मेरी छोरीको केसमा पनि दोहोरियो । उनी पनि फेल भइन्, मैले नै सेट गरेको प्रश्नपत्रमा । जसरी मेरा विद्यार्थीहरू असफल हुँदा मेरो मन दुख्छ, त्यसरी नै मेरी दिदी र छोरी फेल हुँदा पनि मेरो मन दुख्यो । तर पनि पेसाको नैतिकतासँग सम्झौता गर्न मेरो विवेकले दिँदै दिएन ।

राम्रो गर्ने विद्यार्थीको उचित मूल्याङ्कन होस् र यदि कसैले नराम्रो गरेको छ भने उसले कम्तीमा पनि आफ्नो मेहेनतअनुसारको फल पाओस् भन्ने मेरो सधैँको ध्येय रह्यो । मेरो यही ध्येय सार्थक हुने वातावरण नभएकाले ०६४ सालको माघ महिनामा जागिर अवधि सकिन दुई वर्ष बाँकी हुँदाहुँदै मैले शङ्करदेव क्याम्पसबाट स्वैच्छिक अवकाश लिएँ । मेरा लागि बुढेसकालको आर्थिक सहारा पेन्सनभन्दा ठूलो थियो मेरो जिन्दगीको विश्वास, मेरा विद्यार्थीप्रतिको न्याय ।

मेरा छोराछोरीहरूले पनि मबाट सहृदयता र इमानदार कर्तव्यबोधको गुण सिकेका छन् । मैले उनीहरूलाई दिनसकेको सबैभन्दा ठूलो पैतृक सम्पत्ति त्यही नै हो । एउटा शिक्षक भएपछि पूरा गर्नुपर्ने विद्यार्थीप्रतिको न्यायको दायित्व पूरा गरेर मैले मेरो जिन्दगी सार्थक बनाएको छु । त्यसमा मलाई गर्व छ । म सन्तुष्ट छु ।

*(एन्टेना फाउन्डेसन नेपालको कार्यक्रम मेरो जिन्दगी मेरो विश्वासबाट साभार)*

## प्रेरक तन्नेरी

तन्नेरी पुस्ताको लोभलाग्दी प्रतिभा हुन्, अञ्जना राजवंशी । एउटा साधारण विद्यालयबाट उनले एसएलसी परीक्षा दिएकी थिइन् तर नतिजाले सबैलाई चकित बानायो । अर्थात् उनी २०६२ सालको एसएलसीमा छात्रातर्फ नेपालकै प्रथम भइन् ।

त्यतिमात्र कहाँ होर दस जोड दुईको परीक्षामा पनि ८३ प्रतिशत अङ्क ल्याई उत्तीर्ण भएर उनले आफ्नो विलक्षण प्रतिभाको शृंखलालाई टुट्न दिइनन् । उनी अहिले समुदाय विकास विषयमा स्नातक पढ्न अस्ट्रेलिया जाने कोसिसमा छिन् ।

उच्च शिक्षा अध्ययनका लागि सहयोग माग्दै गैरसरकारी संस्थाहरूको ढोका ढकढक्याउँदै हिँडिरहेकी छिन् ।

अञ्जना एउटी सरल, सुशील तन्नेरी छात्रा हुन् । उनी जीवनलाई चुनौतीका रूपमा लिन्छिन् । उनी भन्छिन्, 'जीवन संघर्ष हो । संघर्षमा होमिनुपर्छ । तन्नेरीको हतियार नै आत्मअनुशासन, लगन र परिश्रम हो । केही गरी छाड्ने अठोट नै तन्नेरीको परिचय हो ।'


अञ्जना राजवंशी

-कार्तिकेय घिमिरे



# रक्तरञ्जित बटुवा र जानकीनगर

**त्यो कपडा रूखको फेदमा बाँधिदिएर ऊ सरासर अघि बढ्यो । रूख कौतुहलपूर्ण आँखाले बटुवालाई हेर्न थाल्यो । बटुवाका हरेक गतिविधिले रूख निकै रोमाञ्चित हुँदै गएको थियो । ऊ बटुवा अब कहाँ जाने हो भनेर हेर्न निकै आतुर देखिन्थ्यो ।**

गाउँ सुनसान छ । कहीं कतै मान्छेको पदचाप छैन । लाग्छ बाघ-भालु पनि आज मस्त सुतेका छन् । चिसो हावा सरर बगिरहेको छ । मन्दमन्द मुस्कुराउँदै पातहरू हल्लिरहेका छन् । रूखहरू कसैको प्रतीक्षामा बाटो वरिपरि आँखा उभ्याउँदै ठिङ्ग उभिएका छन् । तिनको लहरमा साथ दिन स-साना बुट्यान र थुम्काहरू उही लहरमा चुपचाप बसेका छन् । ठूलो गोरेटोबाटो मान्छेको पदचापलाई महसुस गर्ने उत्कट अभिलाषा बोकेर टोलाइरहेको छ । लामो फराकिलो गोरेटो, बुङ् बुङ धुलो उडेको बलौटे बाटो, गोरेटोका छेउछाउमा स्वागतार्थ उभिएका ठूलाठूला लक्काजवान रूखहरू, पुड्कापुड्की बुट्यानहरू सबैसबैका आँखा कसैलाई खोजेजस्तै, कसैको आहटलाई पर्खेजस्तै गरी एकटकसँग टोलाइरहेका छन् । गोरेटो भएर दौडिएको धुलो अलिक पर जानकी नगरको ठूलो जङ्गलमा बेतोडसँग कसैलाई खोजिरहेको छ । ठूलो जङ्गल, अनकन्टार र डरलाग्दो चिरबिर अनि स्यालको क्रन्दन । त्यही जङ्गलको ठीक अगाडि तीस वटा जति घरहरूको झुन्डमा आफ्नो परिचय दिन लमतन्न परेर तेर्सिएको छ जानकीनगर गाउँ । जङ्गलको डरलाग्दो सन्नाटाबाट सुरु हुने गाउँ लखन्देही खोलाको बगरमा गएर टुङ्गिन्छ । लखन्देहीको बगरदेखि जङ्गलसम्मको लामो गोरेटोमा मान्छेको पदचाप सुन्न लालायित रूख, बुट्यान, धुलो र हावा चुपचाप-चुपचाप एकतमाससँग बाटोमा आँखा गाडिरहेका छन् ।

'ओहो ! कोही आए जस्तो छ ।' बूढो सिमलको रूख खुसी हुँदै करायो । सबै आफ्ना आँखा तन्काउँदै टाढाबाट आएको सानो आकृतिमा आँखा गाड्न थाले । एउटा सानो आकृति बिस्तारै–बिस्तारै गोरेटो बाटोबाट आइरहेको थियो । त्यो आकृति रातो लुगामा थियो । त्यसको अनुहार चिन्न सकिने अवस्थामा थिएन । ऊ सुस्त-सुस्त आफ्ना पाइला सार्दै आइरहेको थियो । उसको हिँडाइ हेर्दा ऊ थकित देखिन्थ्यो । उसको पोसाक हेर्दा ऊ रक्तरञ्जित देखिन्थ्यो । उसले शिरदेखि पाउसम्म रातो लुगा लगाएको थियो । रातो टोपी, रातो सर्ट, रातो पाइन्ट, रातो जुत्तामा ठाँटिएको ऊ वरिपरि छेउछाउमा कतै नहेरी गाउँका रित्ता घरहरूबाट पनि बेखबर हुँदै लगातार हिँड्दै आइरहेको थियो । ऊ को हो ? कहाँबाट आएको हो ? किन आएको हो ? कसको खोजीमा आएको हो ? यी र यस्तैयस्तै प्रश्नहरू सोच्दै त्यो रक्तरञ्जित बटुवालाई हेर्दै बूढो सिमलको रूख दोबाटोमा ठिङ्ग उभिएको थियो ।

बटुवा हिँड्दै-हिँड्दै सिमलको रूख छेउमै आइपुग्यो । उसले आफ्ना राता आँखा उठाएर सिमलको रूखलाई तलदेखि माथिसम्म हेर्‍यो । रूखले पनि छक्क पर्दै बटुवालाई हेरिरहेको थियो । कहीं कतै नहेरेर एकोहोरो आएको बटुवाले आफूलाई एकतमाससँग हेरेको देख्दा रूख छक्क पर्‍यो । उसले केही कुरा बुझ्न सकेन । बटुवासँग बोल्न सक्ने सामर्थ्य पनि बटुल्न सकेन । एकछिन पछि बटुवा रूखको झन् नजिक उभियो । उसले आफ्ना हात फिँजाएर रूखलाई गम्लङ्ग अँगालो मार्‍यो । उसका आँखाबाट बरर आँसु खस्न थाले । अनौठो अँगालो र अनौठो स्पर्श एवं अनौठो अपनत्व महसुस गर्दै रूखका पनि आँखा रसाए । ऊ केही बोलेन । चुपचाप बटुवाको गतिविधि हेरिरह्यो । बटुवाले खल्तीबाट एउटा लामो रातो कपडा निकाल्यो । त्यो कपडा रूखको फेदमा बाँधिदिएर ऊ सरासर अघि बढ्यो । रूख कौतुहलपूर्ण आँखाले बटुवालाई हेर्न थाल्यो । बटुवाका हरेक गतिविधिले रूख निकै रोमाञ्चित हुँदै गएको थियो । ऊ बटुवा अब कहाँ जाने हो भनेर हेर्न निकै आतुर देखिन्थ्यो ।

बटुवा बिस्तारै अघि बढ्यो । ऊ दोबाटोको दक्षिणतर्फको बाटो हुँदै गइरहेको थियो । केही बेर हिँडेपछि ऊ गाउँको पुछारको घरअगाडि गएर ठिङ्ग उभियो । त्यो घर हरि माड्सापको घर थियो । हरि सर, गुरुआमा र उनका छोराछोरी सबै यही घरमा बस्थे । अङ्ग्रेजी अक्षर 'एल' आकारमा बनाइएको घर चिटिक्कको राम्रो थियो । घरअगाडि सानो र सुन्दर फूलबारी थियो । घरपछाडि आँप, लिची, केरा र थुप्रै फलफूलका बोट थिए । केराको त ठूलो बगैँचा नै थियो त्यहाँ । केराको बगैँचाको ठिक्क पछाडिबाट जानकीनगरको ठूलो जङ्गल सुरु हुन्थ्यो । हरि सर त्यही जङ्गलबाट आधा घण्टा हिँडेर पुगिने विद्यालयमा हेडसर थिए । गुरुआमा पनि त्यहीं पढाउँथिन् । छोरा, छोरी, बूढी र बूढा सबै एउटै स्कुलमा पढ्थे र पढाउँथे । वास्तवमै सुख र सन्तोषले भरिपूर्ण थियो हरि सरको परिवार ।

तर, अहिले यो बटुवा उभिएको घर हरि सरको घरको अवशेष मात्र हो । यहाँ न त फूल छन्, न त केरा, न त मगमग बास्ना । अँह, यहाँ केही छैन । घरको भुइँतला आगोले पूरै डढेको छ । घरको पुछारको खम्बा भाँचिएर एकतर्फ लत्रेको छ, कुनै बस पल्टेर राजमार्गमा अड्किएर झुन्डिएजस्तै गरी कहिले गर्लम्म लड्ने हो, ढल्ने हो अनिश्चितताको भुमरीमा उभिएको छ, हरि सरको घर ।

बटुवाले त्यो घरलाई राम्ररी चिनेजस्तै गरी चारैतिर हेर्‍यो । उसले घरका अङ्गअङ्गहरू माथि आफ्ना आँखा दौडायो । ऊ एकोहोरोसँग घरलाई तलदेखि माथिसम्म हेर्न मग्न भयो । केही क्षणपछि ऊ बिस्तारै सुस्त पाइला चाल्दै आँगनमा प्रवेश गर्‍यो । आँगनमा पाइला टेक्दा पनि निकै डराएजस्तो, निकै आतङ्कित भएजस्तै गरी उसले हेर्‍यो । घरभित्र आगोको लप्कासँगै डढेका माटोका कणकणलाई हेर्दै ऊ निकै क्रोधित देखियो । उसका आँखाहरू अझ गाढा राता देखिए । अनुहारभरि रगत सल्बलाएझैँ लाग्यो । उसले किटकिट कटट्ट दाह्रा किट्यो । अचानक ऊ बौलाहाझैँ गरी खित्का छोडेर हाँस्यो । बूढो सिमलको रूख एकटकसँग बटुवाको यो गतिविधि हेरिरहेको थियो । ऊ बटुवाले अब के गर्ने हो भन्ने कुरा हेर्न निकै उत्सुक देखिन्थ्यो ।

लामो हाँसोपछि बटुवाले एकाएक जमिनमा दुईचार लात हिर्कायो । त्यसपछि ऊ घरको दक्षिणतर्फको भर्‍याङबाट बिस्तारै माथि चढ्यो । ऊ माथि चढ्दै गर्दा घर ओल्लो छेउदेखि पल्लो छेउसम्म नदीमा डुङ्गा हल्लिएझैँ हल्लियो । ऊ निकै सतर्क भएर घरको छेउको कोठाभित्र फुत्त छिर्‍यो । कोठाको चारैतिर माकुराको जालो थियो । पलङका दुई खुट्टा भाँचिएर भुँइमा लत्रिएका थिए । अलिपर रहेको बाक्सा खिया लागेर कालो भएको थियो । किताबहरू सबै धमिरा लागेर माटो हुने तर्खरमा थिए । तन्ना, सिरक, डस्ना

सबै डढेर भ्वाङ परेका थिए । बटुवा निन्याउरो अनुहार लगाएर कोठाभित्र निरीक्षण गर्नमा मस्त थियो । ऊ कोठाका हरेक सामानलाई गहिरो स्पर्शमा समात्थ्यो, छाम्थ्यो र क्वारक्वारती हेर्दथ्यो । धेरै पछि भेट भएका छोराछोरीलाई आमाले च्याप्प समातेर म्वाइँ खाएजस्तै, अँगालोमा कसेजस्तै गरी ऊ हरेक वस्तुलाई अँगाल्न चाहन्थ्यो । उसको मलिन अनुहार र अधैर्य छटपटीले त्यही कुरा प्रतिबिम्बित गरिरहेको थियो ।

एक छिनपछि कोठाको दाहिने कुनामा गएर ऊ ठिङ्ग उभियो । उसले निकै बेर टोलाएर भित्तामा टाँगिएको तस्वीरलाई हेऱ्यो । त्यो तस्वीरलाई धुलोले छपक्कै छोपेको थियो । त्यो कसको तस्वीर हो केही भन्न सकिने स्थिति थिएन । तर बटुवाले त्यो तस्वीरलाई चिन्यो । उसले हतार-हतार त्यो तस्वीरलाई काँटीबाट निकाल्यो । अघाउँजी अँगालो माऱ्यो । अनि आफ्नो रातो रुमालले तस्वीरको धुलो पुछ्न थाल्यो । एकछिन पछि तस्वीर टिलिक्क टल्कियो । तस्वीरमा भएका आकृतिहरू स्पष्ट चिनिने भए । त्यो तस्वीरमा बूढाबूढी आमा-बाबु, सानो छोरा र एउटी फुच्ची छोरी मन्द मुस्कुराउँदै बसेका थिए । फोटो निकै पुरानोझैं लाग्थ्यो । फ्रेममा सबै खिया लागेको थियो । सिसामा सबै धुलो पसेको थियो । तर, फोटोका आकृतिहरू उज्याला देखिन्थे । अहिले यहीं कतै दौडिरहेका छन् कि जस्ता ।

बटुवाले निकै बेर आफ्ना दुई हातले समातेर एकटकसँग फोटो हेऱ्यो । ऊ फोटोलाई हेर्दै कहिले रुने र कहिले हाँस्ने गर्न थाल्यो । ऊ फोटोका आकृतिहरू घरका अनेक कुना कन्दरामा खोज्न थाल्यो ।

साँच्चै त्यो फोटो खिचेको दिन । आहा ! सम्झँदै कति मज्जा लाग्छ । हरिपुरबाट स्टुडियोका दाइ घाँटीमा क्यामेरा भिरेर साइकलको हर्न बजाएर हुँइकिँदै आउनुभएको थियो । त्यो दिन आमा हाम्री गुरुआमाको जन्मदिन थियो । बुबा, म र मेरी बहिनी हामी सबै दङ्ग थियौँ । शनिबारको दिन भएकाले विद्यालय जाने चिन्ता पनि थिएन । विद्यालय खुल्दा त हाम्रो घर सधैं खालि हुन्थ्यो । हामी सबै विद्यालयमै हुन्थ्यौं ।

'ल ल, सबैजना आओ आज फोटो खिचाउने,' बुबाले आँगनमा निस्किएर कराउँदै हामीलाई बोलाउनु भयो । आमा, म र बहिनी हतारहतार आँगनमा आयौँ । त्यो दिन बुबाले अकासे रङको दौरा, सुरुवाल र नेपाली टोपी अनि खरानी रङको इस्टकोट लगाउनु भएको थियो । आमाले रातो साडी चोलो र राम्रो ओढ्ने ओढ्नु भएको थियो । बहिनी रङ्गीचङ्गी खालको फ्रकमा दङ्ग थिई । मैले सफारी सर्ट र पाइन्ट लगाएको थिएँ । बुवाले त्यो लुगा हामीलाई काठमाडौंबाट ल्याइदिनु भएको थियो ।

हाम्रो परिवारलाई एकै ठाउँ देखेर स्टुडियोका दाइ दङ्ग पर्नुभयो । उहाँले निकै रमाई-रमाई फोटो खिचिदिनु भयो । त्यो दिन मैले परिवारका सबैसँग बसेर फोटो खिचें, बहिनीसँग मात्र बसेर पनि खिचें । अनि आमा र बुबासँग मात्र बसेर पनि खिचें । घरमा बिछट्टै राम्री थुप्रै दूध दिने कैली भैंसी थिई । मैले भैंसीमाथि चढेर पनि फोटो खिचें । त्यो दिन मलाई साह्रै रमाइलो लागेको थियो । जिन्दगीमा पहिलोचोटि मैले र बहिनीले फोटो खिचाएका थियौं ।

त्यसअघि हामीले कहिल्यै फोटो खिचेका थिएनौं । बुबाआमाको जवानीको फोटो हेर्दा हामी दङ्ग पर्ने गर्थ्यौं । फोटो खिचाइसकेपछि त्यो दिन हामीले सेलरोटी, ठेकुवा र आलुकोबीको तरकारी टन्न खायौं । बहिनी संसाँझै सुती । बुबा पनि स्कुलको कागजपत्र मिलाउन थाल्नुभयो । तर म त मेरी आमासँग त्यो साँझ उहाँको काखमा सुतेर गफ गर्नमै मस्त भएँ । त्यो साँझ मैले मेरी आमालाई थुप्रै प्रश्न गरें । म सानो थिएँ । भर्खरै चार कक्षामा पढ्थें । मेरो मनमा थुप्रै जिज्ञासाहरू उम्लेर आउँथे । अनि म सबै जिज्ञासाको प्रश्न बनाएर आमालाई सोध्थें । एक दिन मैले लखन्देही खोलामा तीनचार जना दुसाद दाइदिदीलाई बगाएर ल्याएको पनि देखेको थिएँ । सबै हेर्न आएका मान्छेले यी सबैलाई मारेर खोलामा फालेको हो भन्दै कराइरहेका थिए । बुबाको हात समात्दै आइरहेका बेला मैले यस्तो कुरा सुनें । त्यो दिन बिहान मैले बुवालाई 'बाबा मान्छेले मान्छेलाई किन मार्छन् ?' भनेर पनि सोधेको थिएँ । तर बुबाले केही जवाफ दिनुभएन । उल्टै छिटो हिँड स्कुल जान ढिला हुन्छ, भनेर मलाई कराउनुभएको थियो । यसरी गाउँमा खान नपाएका मुसहर, डुम र चमार साथीहरूले झिङ्गे माछा खान मरिहत्ते गरेको, नयाँ लुगा लगाउन मरिहत्ते गरेको, सधैं नाङ्गौ हिँडेको देख्दा मलाई अचम्म लाग्थ्यो । त्यसैले मैले मेरी आमासँग त्यो दिन मान्छे किन कोही धनी, कोही गरिब हुन्छन् ? भन्ने प्रश्न पनि सोध्नुपर्ने थियो ।

म आफ्ना मनमा लागेका प्रश्न सोध्ने तर्खरमा सम्झँदै थिएँ । आमा त घुरघुर घुर्दै भित्तामा अडेस लागेर निदाउनुभएछ । मैले आमालाई कराउँदै उठाएँ । त्यसपछि उहाँ र म सँगै गएर सुत्यौं । त्यो रात मनभरि थुप्रै प्रश्नहरू सम्झँदै म सुतें । भोलिपल्ट बिहानै बुबा विद्यालय बनाउने सहयोग लिन काठमाडौंतिर लाग्नुभयो । आमा, म र बहिनी भने खाना खाएर विद्यालयतिर लाग्यौं । त्यो दिन श्री पञ्चमीको दिन थियो । सरस्वती माता विद्याकी दाता भनेर पूजा गर्ने यो दिन एकदमै रमाइलो हुन्थ्यो । हामी सबै सरस्वतीको मुर्तीमा पूजा गर्थ्यौं र मिठाइ खान्थ्यौं ।

विद्यालयमा सरस्वती पूजाको रमाइलो सकिएपछि आमा, म र बहिनी अनि हाम्रो गाउँका दुई चारजना अरू साथीहरू सबै घर फर्कियौं । घर फर्कंदा मैले नाङ्गो खुट्टा र ज्यान लिएर जङ्गलमा हिँडेका मुसहर साथीहरूलाई भेटें । उनीहरू सबै हामी स्कुल गएर आएकाहरूलाई लाटाले पापा हेरेजस्तै

# सोचेर आऊ तर

**– बलराम दाहाल**

आओ को छ विरुद्ध यो कलमको सक्नेहरूले जुध  
तिम्रा बन्दुक ती उतार रणमा भर्दै गरे बारुद ।  
चर्को क्रान्ति गरेर हुन्न कति छन् सेना तयारी गर  
कस्तो थेग्दछ क्रान्ति यो मुलुकले सोचर आऊ तर ॥

बारम्बार छ क्रान्ति क्रान्ति मुखमा हो क्रान्ति भाका भने  
खोजको अब क्रान्ति आज कुन हो खै स्पष्ट खाका बने ।  
आत्रै मानव राष्ट्रका अमिन झै संवेदना छन् पर  
कस्तो थेग्दछ क्रान्ति यो मुलुकले सोचरे आऊ तर ॥

गोलीको आब क्रान्तिले त गु- लियो खानेछ सोचून् अझै  
वार्ताको अब क्रान्ति चल्छ नचले हों राष्ट्रघाती सबै ।  
मात्रै क्रान्ति विचारको मुलुकले माग्दा नजाऊ पर  
कस्तो थेग्दछ क्रान्ति यो मुलुकले सोचेर आऊ तर ॥

यौटा शाषकको विदाई गरिदा यी हात हल्ले तब  
अर्को शाषकको विदाइ गरिदा हल्लिन्छन् खुट्टा अब ।  
हेरौंला अब क्रान्तिले कतिजना काँप्लान् र को थर्थर  
कस्तो थेग्दछ क्रान्ति यो मुलुकले सोचेर आऊ तर ॥

साक्षी भाषणको छ टेप कसरी कुर्ले गरे घोषणा  
निम्त्यो भोलि भने म हुन्छु न तिमी साँच्चै निराशीपना ।  
सक्छौ ताक विचारका कमलमका हामी स्वयं बन्दुक  
कस्तो थेग्दछ क्रान्ति यो मुलुकले सोचेर आऊ तर ॥



गरी क्वारक्वारती हेर्दै थिए । मैले कराउँदै मेरो घरमा काम गर्ने जानकी दिदीकी छोरीलाई बोलाएँ । 'गे फुल्की यहाँ आऊ त ।' फुल्की म जत्रै थिई । मजस्तै स्कुल जाने भए ऊ पनि मसँगै यसपालि कक्षा चारमा जान्थी होली । तर ऊ स्कुल जान्न । मैले बोलाउनासाथ ऊ दौडँदै मेरो छेउमा आई । मैले खल्तीमा हात छिराएर उसलाई सरस्वती पूजाको प्रसादी लड्डु दिएँ । फुल्की दङ्ग पर्दै खान थाली । उसले खुसी भएर खाएको देख्दा म दङ्ग परेँ । अलि परसम्म हामी सँगै हिँडेर आएपछि फुल्कीको घर आइपुग्यो । ऊ 'गे माई...' भन्दै आफ्नो घरतिर गई । हामी पनि आफ्नो घरमा आयौँ ।

त्यसको तीनचार दिनपछि बुबा काठमाडौँबाट आइपुग्नु भयो । त्यो शुक्रबारको दिन थियो । हामी २ बजेतिर घर पुगिसकेका थियौँ । बुबाले हामीलाई गिलोगिलो खानेकुरा ल्याइदिनुभएको थियो । खाँदा गुलियो मीठो हुने त्यो खानेकुराको नाम के हो भनेर मैले बुबालाई सोधेँ । बुबाले गुदपाक हो छोरा, भन्नुभयो । त्यो बेला काठमाडौँ गएर आउँदा बुबाले हामीलाई लुगाफाटो र आमालाई केही सामान ल्याउनु भएको थिएन । बुबा खालिहात आउनुभएको देखेर म निकै रिसाएको पनि थिएँ । तर, त्यतिबेला बुबाले अहिले विद्यालयको पक्की घर बनाउनुपर्छ । यो सबै पैसा यो गाउँलेको सम्पत्ति हो । सरकारी पैसा लिनुहुन्न भनेर मलाई सम्झाउनु भएको थियो ।

त्यो दिन लखन्देही वरिपरि थुप्रै घरका मान्छे बाढीको डरले कराउँदै थिए । मैले बुबालाई, 'बुबा बाढी रोक्न के गर्नुपर्छ' भनेर सोधेको थिएँ । बुबाले हामी सबैले बढीभन्दा बढी रूख रोप्नुपर्छ भन्ने जवाफ दिनुभएको थियो । बाटोमा हिँड्दा मेरो बुबालाई सबैले नमस्कार गर्थे । मलाई पनि नमस्कार भन्न निकै रमाइलो लाग्थ्यो । हामी हिँड्दै जाँदा ठुलीकान्छी दिदीको घरछेउमा पुग्यौँ । मैले त्यहाँ दुईचार वटा बोटका विरुवा देखेँ । बुबालाई मैले हतारिँदै सोधेँ, 'बाबा त्यो के को बिरुवा हो ?' उहाँले त्यो सिमलको बिरुवा हो भनेर भन्नु भयो । उहाँको कुरा सुनेपछि म दङ्ग परेँ । मैले बुबाको हात छोड्दै हतारहतार गएर सिमलको बिरुवा उखेलेँ र दौडँदै लगेर त्यो बिरुवा हाम्रो जग्गामै पर्ने दोबाटोमा रोपेँ । मैले त्यसरी सिमल रोपेको थाहा पाएर मेरा साथीहरू भानु, सन्तु, वीरे, चमनकाजी र चन्दुले पनि सिमल रोपेका थिए । त्यो दिन सम्झँदै मलाई कति आनन्द लाग्छ ।

यसरी रूख रोप्ने, घुम्ने गर्दै त्यो दिन बितेको पत्तै भएन । साँझपख बुबा र म घर आइपुग्यौँ । आमाले खाना पकाएर तयार राख्नुभएको थियो । बहिनी खाना खाएर सुतिसकेकी थिई । हामीले हातमुख धोएर खाना खायौँ । बुबा फेरि विद्यालयको कागजपत्र मिलाउनतिर लाग्नुभयो । म आमाको काखमा सुतेको थिएँ ।

रात बिस्तारै-बिस्तारै छिप्पिँदै थियो । यस्तै रातको ११ बजेतिर बुबाको नाम लिएर तल आँगनबाट आठ-दशजना मान्छेले बोलाए । बुबा उठ्नु भयो । म पनि हतार-हतार उठेँ । बुबाले ढोका खोल्नासाथ ती सबै मान्छेहरू घरमाथि चढे । ती सबै मान्छेले रातो लुगा लगाएका थिए । मुख छोपिने गरी रुमाल बाँधेका थिए । हातमा बन्दुक र खुकुरी बोकेका थिए । उनीहरू एक-अर्कालाई 'कमरेड' भनेर बोलाउँथे ।

बुबाले डराउँदै तपाईंहरू किन आउनुभएको भनेर सोध्नु भयो । त्यसपछि उनीहरूले बुबालाई 'तपाईंले विद्यालय बनाउन भनेर बिहान काठमाडौँबाट ल्याउनु भएको पैसा कहाँ छ झिक्नूस्' भने । बुबाले 'अहँ ! हुँदैन त्यो पैसा, गाउँका विद्यार्थीलाई पक्की विद्यालय भवन बनाउन ल्याएको हो,' भन्नुभयो । त्यसपछि तीमध्ये एउटा नाइकेजस्तो देखिने मोटे मान्छेले बुबालाई तपाईं पनि राख्नूस्, हामीलाई पनि दिनूस् । डकैती लाग्यो भन्नूस् भइहाल्छ नि भनेर सम्झाउन थाले । बुबाले रिसले मुर्मुरिँदै 'हुन्न, हुनै सक्दैन' भनेर कराउनुभयो । त्यसपछि अघि अगाडि नै कोठाभित्र छिरेको एउटा मान्छेले मेरी बहिनीलाई निदाएकै बेला बोकेर आयो । बहिनीको घाँटीमा चमचम चम्किने दसैँमा खसी काट्नेजस्तै खुकुरी राखेर पैसा कहाँ छ माड्साब भनेर सोध्यो । त्यसपछि बुबाले रुँदै पैसाको पोको उनीहरूलाई दिनुभयो । उनीहरू पैसा लिएर हिँड्न लागेका थिए ।

एक्कासी आमा चिच्याउनु भएको आवाज आयो । बुबा र म दौडँदै आमा सुत्नु भएको कोठाभित्र गयौँ । त्यहाँ उनीहरूसँगै आएको अर्को मान्छे आमालाई जबर्जस्ती गरिरहेको थियो । आमामाथि यस्तो व्यवहार भएको देखेपछि बुबा रिसले आगो हुनुभयो । उहाँले त्यो मान्छेलाई तानेर एक झापड हिर्काउनुभयो । त्यसपछि त्यो नाइकेले मेरो बुबाको हात खुकुरीले छ्याप्प छिनायो । बुबा चिच्याउँदै कराउन थाल्नुभयो । यो दृश्य देखेर आमा अत्तालिनुभयो । उहाँले ढोकाको आग्लो उठाएर नाइकेको टाउकोमा ड्याम्म हिर्काउनु भयो । नाइकेको टाउकोबाट भलभली रगत बग्न थाल्यो । उता बुबाको बगेको रगतले कोठा नै रक्ताम्य भएको थियो ।

रिसले आगो भएको नाइकेले बन्दुक सोझ्याएर आमालाई हान्न कस्सियो । म दौडँदै आमाको अगाडि पुगेँ । बहिनी मैले नै बोकेको थिएँ । गोली ड्याम्म आएर मेरी बहिनीलाई लाग्यो । बहिनीलाई गोली लागेपछि म र आमा दुबै आगो भयौँ । मैले झम्टिँदै उसको हातमा टोकिदिएँ । उसको हातबाट बन्दुक भुइँमा खस्यो ।

अचानक त्यतिबेला नै पछाडि उभिएको अर्को भुसतिघ्रेले आमाको घाँटी समातेर छिनायो । दसैँमा खसी काटिएझैँ मेरी आमाको टाउको भुइँमा खस्यो । म 'बचाऊ बचाऊ' भनेर गुहार माग्न थालेँ । उनीहरूले मलाई एक लात हानेर पर पुऱ्याए । एकछिन पछि म झसङ्ग हुँदै ब्युँझिएँ ठूलो आवाजमा केही पड्किएझैँ लाग्यो । मैले आफ्ना आँसुले भिजेका आतङ्कित आँखाले बाहिर हेरेँ । मेरो घर दनदनी बलिरहेको थियो । केही पर गाउँलेहरू उभिएर हेरिरहेका थिए । मेरो बुबा, आमा र बहिनी मरिसकेका थिए । मेरो प्यारो कैली भैँसी पनि कराउँदै छटपटाइरहेको थियो । आगो बिस्तारैबिस्तारै मेरो जिउमाथि पनि लाग्दै थियो । म पोलेर छट्पटाउँदै थिए । यसरी केही छिनमै म अचेत भएँ ।

हँ, यो के भयो, टोलाएर केही सम्झेजस्तो गरी बसेको बटुवा झसङ्ग भयो । ऊ उभिएको घर ढल्न थाल्यो । बटुवा दौडँदै आँगनमा गएर उभियो । उसले आमा, बुबा र बहिनीसँगै बसेको फोटो छातीमा टाँसेर समाएको थियो । उसको अगाडि नै उसको घर ढलेर थुप्रो भयो । थुम्कोजस्तो । उसका सम्झनाहरू सबै फेरि ढले ।

'घेर-घेर चारैतिरबाट घेर' अचानक यस्तो आवाज सुन्नुपर्दा बटुवा झसङ्ग भयो । ऊ आवाज आएतिर दौडियो । अघि ऊ आउँदा घर छाडेर जङ्गलमा लुकेका सबै गाउँले जम्मा भएका थिए । उनीहरू सबैको हातमा खुकुरी, तरवार र भाला थियो । कमरेडहरू गाउँको बीचमा घेरिएका थिए ।

'अट्याक-अट्याक, आक्रमण...' सिमलको रूखमा अडेस लागेर बसेको बटुवा चिच्यायो । धर्ती थर्किने गरी आएको त्यो आवाजको उभारलाई सबैले महसुस गरे । आवाज कसको हो, उनीहरूले देख्न सकेनन् । तर आवाजमा अचम्मको तागत देखियो । गाउँलेहरू बन्दुक बोकेकाहरू माथि निडर भएर जाइलागे ।

एकछिन पछि गाउँलेहरू कमरेडहरूको लासमाथि बुर्कुसी मारेर रमाइरहेका थिए । सिमलको रूखले अचम्म मान्दै हेऱ्यो । रक्तरञ्जित पोसाक लगाएको बटुवा हातमा मास्टर साहेबको परिवारको तस्वीर बोकेर बिस्तारै-बिस्तारै आकाशतर्फ उड्दै थियो । ऊ उड्दै-उड्दै आकाशको नीलो समुद्रमा बिलायो ।

आज पनि बूढो सिमलको रूख आकाशको नीलो समुद्रलाई हेरेर आफूले आफैंलाई प्रश्न गर्नेगर्छ, 'के त्यो बटुवा नीलो लुगा लगाएर एक दिन यो धर्तीमा आउला त ?'

●

# योग्य विमानचालक कसरी बन्ने ?

– रमण घिमिरे, *ट्रेनी को-पाइलट*



विश्वमा आर्थिक समृद्धिसँगै समयको महत्व पनि बढ्दै गएको छ । समय र पैसा एकअर्कामा परिपूरक बनेका छन् । भनिन्छ Time is Money । यही समय जोगाउन हवाइयात्राको व्यापक वृद्धि पछिल्लो दशकमा देखिएको छ । नेपालमा पनि खुला आकास नीति सन् १९९१ मा लागू भएपछि वायुयान सेवाको विस्तार हुँदै आएको छ । हुनत सन् १९५८ देखि १९९१ सम्म नेपालमा नेपाल वायुसेवा निगमको एकछत्र राज थियो । तर, पछिल्लो समयमा विभिन्न निजी वायुसेवा कम्पनीहरुले सर्वसाधारणलाई गुणस्तरीय र सुलभ सेवा प्रदान गर्दै आएका छन् ।

नेपालमा निजी वायुसेवा कम्पनीहरुको वृद्धिसँगै विमान चालकको माग पनि स्वभाविक रुपमा बढ्दै गएको हो । देशमा शान्ति स्थापनासँगै पर्यटन व्यवसायको आकार बढ्न थालेपछि दुर्गम पर्यटकीय क्षेत्रमा जानका लागि हवाइयात्रा नै भरपर्दो माध्यम बनेको छ । यससँगै अहिलेको युवापुस्ता विमान चालक बन्ने होडमा लागेका छन् । छिमेकी मुलुक भारत र चीनमा भएको आर्थिक विकासले पनि नेपालमा निकट भविष्यमै ठूलो संख्यामा विमान चालकको अभाव स्थिति छ ।

विमान चालक पेसा संसारभरि नै एउटा आकर्षक पेसाका रुपमा रहेको छ । भनिन्छ हरेक १० लाख व्यक्तिमा एक जनामात्र विमान चालक हुन्छ । यो पेसामा पैसा, मान-सम्मान हुनुका साथै देशविदेशको भ्रमण गर्न पाइने अवसर भएकाले पनि युवापुस्ता यसतर्फ आकर्षित गरेको छ । अनुभवि विमान चालकले विदेशमा काम गरेर समेत मासिक लाखौं रुपैयाँ कमाउने र स्थापित भएपछि नेपालमै पनि राम्रो कमाइ हुने भएकाले युवाहरुले यस पेसालाई राज्ने गरेका छन् ।

विमान चालक बन्न धेरै पढ्न नपर्ने र थोरै समयमा धेरै आम्दानी गर्न सकिने भन्ने भ्रमले पनि युवाहरु यस पेसामा आउँन चाहन्छन् । तर, सही जानकारीको अभावमा र प्रक्रिया पूरा नगर्दा केहीले दुःख पाएर पैसा र समय बर्बाद पारेको खबर पनि सुनिएको छ । त्यसैले यो पेसामा प्रवेश गर्नुअघि यी कुराहरु जान्न जरुरी छ ।

**विद्यालय** : Pilot Training का लागि CAAN बाट मन्यताप्राप्त संस्थामा अध्ययन गर्नुपर्छ । CAAN को बोर्डमा एउटा List प्रकाशित गरिएको हुन्छ र यी मध्ये कुनै एक छनोट गर्नुपर्छ । नेपालमा पनि अहिले SHIVANI AIR नामक संस्थाबाट CIVIL Aviation Authority of Nepal (CAAN-Course) को अध्ययन गराइन्छ । यो नै नेपालको पहिलो र एकमात्र संस्था हो । यसबाहेक अमेरिका, फिलिपिन्स, मलेसिया, दक्षिण अफ्रिका, क्यानडा, अस्ट्रेलिया आदि मुलुकका कैयौं स्कुलहरु CAAN बाट स्वीकृत छन् । तर कुन उत्कृष्ट र कुनचाहिँ छनोट गर्ने भन्ने निष्कर्ष निकाल्न धेरैलाई गाह्रो हुन्छ । यसका लागि विभिन्न कुरा जान्न जरुरी छ ।

**कोर्स** : अमेरिका, फिलिपिन्स, क्यानाडा Federal Aviation Authority (FAA) अन्तर्गत पर्छन् र त्यहाँ FAA अन्तर्गतको कोर्स पढाइ हुन्छ । मलेसिया, दक्षिण अफ्रिका मा United Kingdom Civil Aviation Authority (UKCAA) अन्तर्गत पढाइ हुन्छ । यी देशहरु चाँडै नै Joint Aviation Authority (JAA) मा परिणत हुँदैछन् । FAA को पढाइ (Theory) सजिलो र थोरै Paper को मात्र जाँच दिनुपर्छ । UKCAA / JAA को Theory Exam तुलनात्मक रुपमा गाह्रो र धेरै समय लाग्ने हुन्छ । धेरै एबउभच को जाँच दिनुपर्ने र त्यसका लागि पढ्न पनि पर्याप्त समय चाहिने हुनाले ६ देखि ८ महिना Theory पढ्दैमा लाग्ने गर्दछ भने FAA को सम्पूर्ण Course नै कम्तीमा ६ महिनामा समाप्त गर्न सकिन्छ ।

**खर्च** : अमेरिका र फिलिपिन्स मा सम्पूर्ण कोर्स पूरा गर्न ३६ देखि ४० हजार अमेरिकी डलरको हाराहारीमा खर्च लाग्न सक्छ । मलेसियामा भने स्कुल हेरी दुई लाख २५ हजार देखि दुई लाख ५० हजार मलेसियन रिङ्गेट खर्च लाग्छ । दक्षिण अफ्रिकामा पनि ४० हजार अमेरिकी डलरभन्दा बढी खर्च लाग्ने देखिएको छ । डलरको रेटअनुसार विमान चालक अध्ययनका लागि खर्चमा घटबढ हुनसक्छ ।

**अन्य जानकारीः**

Pilot Training Course ज्यादै खर्चिलो भएकाले सोको अध्ययनमा जानुभन्दा अगाडि अनेकौं पक्षको विचार र अध्ययन गर्नु जरुरी छ । यसरी जानकारी लिने सबैभन्दा सजिलो उपाय भनेको पाइलट कोर्स पूरा गरेका अथवा अध्ययन गर्दै गरेकाहरुसँगको परामर्श नै हो । कोर्स पूरा गर्न लाग्ने खर्च, बस्ने वातावरण र सुविधाहरु, बीमा, Fleet (SINGLE-TWIN), Student to Aircraft Ratio, Instructor to Student Ratio, Fuel Price बढेघटेमा समायोजन हुने नहुने, उडानका लागि अनुकूल-प्रतिकूल मौसम, Off School Job, Hidden Cost आदिका बारे विद्यार्थीले पूर्वजानकारी लिन आवश्यक हुन्छ । यसबाहेक यस क्षेत्रका अनुभवी व्यक्तिहरुको रायसल्लाह लिनुपर्दछ ।

**आवश्यकताः**

CAAN को FOR (Flight Operation Requirement) अनुसार CPL License प्राप्त गर्न यी कुरा पूरा गर्न जरुरी छ ।

(क) उमेर र मेडिकल आवश्यकताः आवेदनकर्ताको उमेर कम्तीमा १८ वर्ष हुनुपर्ने र Current Class 1 Medical License Holder हुनुपर्ने ।

(ख) प्राविधिक ज्ञान, अनुभव र प्रयोगात्मक

उडानको सम्बन्धमा: आवेदनकर्ताले Commercial Pilot License (CPL) कोर्स CAAN को मान्यताप्राप्त संस्थाबाट पूरा गर्नुपर्ने र License df Multi-Engine र Instrument Rating (IT) उल्लेखित हुनुपर्ने र कम्तीमा दुई सय घण्टा उडान समय तोकिएको हुनुपर्ने । जसमध्ये निम्नअनुसारको बाँडफाँट गरिएको हुनुपर्ने ।

१. कम्तीमा एक सय घण्टा PIC (Pilot In Command) का रुपमा ।

२. कम्तीमा २० घण्टा Cross Country Flight PIC को रुपमा, जसमा आफू Sole Manipulator of Control हुनुपर्ने र कम्तीमा दुई वटा Full Stop Landing दुइटा छुट्टाछुट्टै ठाउँमा हुनुपर्ने ।

३. कम्तीमा १० घण्टाको यान्त्रिक उडान (Instrument Flying), जसमा पाँच घण्टा Flight Simulator मा पनि पूरा गर्न सकिन्छ ।

४. कम्तीमा पाँच घण्टाको रात्रि उडान जसमा कम्तीमा पाँच Take-Off र पाँच Landing PIC को रुपमा गर्नुपर्ने ।

यसरी सम्पूर्ण प्रक्रिया पूरा गरेर आएपछि CAAN मा आफ्नो कागजपत्र पेस गर्नुपछए ऋब्ल् का कर्मचारीले कागजपत्र जाँच गर्छन् र सही भएको खण्डमा CPL-Exam दिनका लागि योग्य ठह्र्याउँछन् । यो भ्रक हरेक तीन महिनामा हुने गर्दछ । यसका लागि आवश्यक Syllabus CAAN मा पाउन सकिन्छ ।

यो Exam पास गरेपछि Aeronautical Information Procedure (AIP) र NCAR (Nepalese Civil Airworthiness Requirement) को कक्षा CAAN मा लिनुपर्छ । एक हप्ते लामो यो कोर्स पूरा गरेपछि कुनै Airlines मा आबद्ध भएको खण्डमा निकट भविष्यमा उडाउने जहाजको Type Technical Classs आफ्नो Airlines बाट र Exam CAAN मा दिनुपर्छ । त्यसपछि Airlines बाट Flight Traingin प्राप्त गरी Flight Test दिनुपर्छ । यी सबै परीक्षा सफलतापूर्वक पार गरेको खण्डमा जुनियर Co-Pilot का रुपमा व्यावसायिक उडान गर्न पाइन्छ ।

यसरी तालिम सकेर आएपछि तुरुन्तै Airlines मा आबद्ध भएको खण्डमा पनि Co-Pilot बन्न कम्तीमा ६ देखि ८ महिना लाग्ने देखिन्छ । त्यसमाथि पनि Airlines ले आफ्नो Schedule Flight बाट समय निकालेर Training गराउने, Instructor Pilot को कमी, Weather Condition आदिले गर्दा त्यो समय अझ लम्बिने देखिन्छ ।

अझ समयमा Airlines मा आबद्ध हुन नसकेमा लामो समय खाली बस्नुपर्ने बाध्यता छ । देख्दाखेरि छोटो कोर्स भए पनि विमान चालक बन्न विभिन्न कारणले निकै समय लाग्छ । Pilot Training लिन निकै खर्च हुने र लगानी उठाउन लामै समय लाग्ने भएकाले पनि यस पेसामा आउन चाहनेले सोचविचार गरेर मात्र आफ्नो निर्णय लिनुपर्दछ ।

विमान चालक चुनौतीपूर्ण र जिम्मेवारीपूर्ण पेसा हो । यो पेसा व्यक्तिको जीवन र मृत्युसँग सीधैं सम्बन्धित छ । सानो त्रुटिले पनि ठूलो दुर्घटना निम्त्याउने हुनाले आफू सधैं शारीरिक र मानसिक रुपमा चुस्त दुरुस्त रहनुपर्दछ । एउटा सुरक्षित र भरपर्दो विमान चालक बन्न निकै ठूलो लगन, परिश्रम र अनुशासन चाहिन्छ । त्यसैले पनि यस पेसामा आफ्नो भविष्य बनाउन चाहनेहरुले यसको क्रेजलाई मात्र पच्छ्याएर हुँदैन यसका सम्पूर्ण पक्षलाई मनन गरेर निर्णय लिनु जरुरी हुन्छ । ●

# रमेश विकलबाट सिक्ने कुरा



रमेश विकल नेपाली आख्यान साहित्यका धरोहर हुन् । उनी हामी माझबाट वि.सं. २०६५ पुस २ गते दिउँसो ३ बजे बिदा भए । विकल नेपाली कथा र उपन्यास विधामा नयाँ युगको सुरुवात गर्ने लेखक हुन् ।

वास्तवमा विकलबाट तन्नेरी पुस्ताका लेखकहरूले सिक्नै पर्ने दुई कुराहरू छन् । पहिलो कुरा उनको चित्ताकर्षक सजीव चित्रणको शैलीको पक्ष हो । विकल चित्रकार पनि थिए । त्यसैले उनले शाब्दिक वर्णनमा पनि चित्रझैँ सजीव चित्रण गर्न सके । दोस्रो कुरा परिस्कार र परिमार्जनप्रति सचेतताको पक्ष हो । उनी आफ्ना रचनालाई निकै सोचेर, बुझेर परिमार्जन गर्थे ।

उनी कथा कथाकार भएर लेख्थे तर त्यसलाई एउटा सम्पादक, पाठक र समीक्षक भएर परिमार्जन गर्दथे । आज उनको स्मृतिमा जताततै विकलका कृतिको बखान र गुनगान छ । वरिष्ठ साहित्यिक पत्रकार रोचक घिमिरेको अध्यक्षतामा रमेश विकल साहित्य प्रतिष्ठान पनि खुलेको छ । तर, विकल युगौं युग बाँच्ने लेखक हुन् । उनको रचनामा त्यो शक्ति छ । किनकि त्यहाँ देशका गरिबको चित्कार र रोदनको सजीव तस्वीर छ । तन्नरीको तर्फबाट महान् स्रष्टा विकलप्रति भावपूर्ण श्रद्धाञ्जली । ●

– अविनाश श्रेष्ठ



# माछा ! माछा !!...!!!

**अब कथा-नायक नै यस्तो 'दगाबाज', 'छली', 'असाध' भएपछि नायिका पनि बत्तीस लक्षणले जुरेकी 'स्वकीया' नभएर 'परकीया', 'सामान्य', 'पद्मिनी', 'हस्तिनी', 'खण्डिता', 'अभिसारिका', 'भोग्या' अझ 'सर्वभोग्या' हुनु पनि कुनै आश्चर्यको कुरा भएन ।**

## पात्र-परिचय

वास्तवमा यो कथा मेरो एक जना मित्रको हो । खै उसलाई मित्र भनूँ कि नभनूँ ? 'मित्र' शब्दले अचेल पहिलेपहिलेको जस्तो अर्थ दिन छाडेको छ । त्यसैले उसलाई 'परिचित'मात्र वा 'अलि बढी परिचित' भन्दा हुन्छ । नाम हो उसको बी.आर. अर्थात् बाबुराम । नामतिर नजानुस् । नाम मात्र सुन्दा त ऊ साह्रै सोझो गौप्राणी लाग्न सक्छ तपाईंलाई । तर छ ऊ नम्बरी धुरन्धर । धुरन्धर कुन अर्थमा भने-उसले नजानेको कुरा अथवा उसले थाहा नपाएको विषय यस असार संसारमा शायदै होला । उसको समग्र व्यक्तित्वलाई बुझाउन 'धुरन्धर' शब्द पनि अपर्याप्त छ त्यसैले ।

उसको भित्री र बाहिरी दुवै व्यक्तित्वको चित्र उतार्ने यथासम्भव प्रयास गर्दै म यहाँ रत्तीभर कन्जुस्याइँ नगरी अरू केही पर्यायवाची किसिमका लोकप्रचलित शब्दहरू पस्कँदै छु, जस्तै- चालू, घाँघ, चतुरचम्बु, चल्तापुर्जा , खली, खुर्राट, चङ्ख, डेढअक्कली, खलीफा, छट्टू, धूर्त, नकचरो, लम्पट आदिआदि । उपर्युक्त सारा विशेषण जोर्दा पनि अझै उसको खूबी प्रस्ट पार्न नसकेको खिन्नताबोध– मभित्र पहाडी खहरे बनी गडगडाइरहेको छ यस बेला ।

यस्तो छ हाम्रो कथाको नायक ! के गर्ने – जमानाअनुसारको नायक कथामा राख्नुपर्ने बाध्यता ! यो नायक परम्परित नायक जस्तो न 'धीरप्रशान्त' छ, न 'धीरोदात्त', न 'धीरललित' नै । बरु 'धीरोद्धत' नायकमा पाइने केही गुण (बैगुन ?) हाम्रो यस कथाको नायकमा नपाइने होइन । अब कथा- नायक नै यस्तो 'दगाबाज', 'छली', 'असाधु' भएपछि नायिका पनि बत्तीस लक्षणले जुरेकी 'स्वकीया' नभएर 'परकीया', 'सामान्या', 'पद्मिनी', 'हस्तिनी', 'खण्डिता', 'अभिसारिका', 'भोग्या' अझ 'सर्वभोग्या' हुनु पनि कुनै आश्चर्यको कुरो भएन ।

हाम्रो यस कथामा अझ एक जना लम्बरी सहायक पात्र पनि छ । उसको परिचय कथा आफैँले यथास्थान, यथासमयमा तपाईंलाई दिने नै छ । त्यस सहायक पात्रलाई चरित्रहरूको कुन कोटीमा राख्ने हो पाठक ! त्यो तपाईं आफैँले विचार गर्नुहोला ।

मैले माथि नै भनिसकेँ; म यो कथाको प्रस्तोता मात्र हुँ, भोक्ता होइन । यस कथाको भोक्ता अर्थात् नायक (खलानायक?) उही मेरो 'अलि बढी नै परिचित' व्यक्ति 'बी.आर.' अर्थात् 'बाबुराम' हो । अब अगाडिको कथा उही मेरो परिचित अधीर अशान्त, अधीर लम्पट नायकको मुखारबिन्दबाट सुनौं ।

## नायिका-भेट

बिल्डिङको अन्डरग्राउन्डमा पार्किङ गरेर कारमा शिशा चढाउँदै थिएँ । त्यत्तिकैमा एउटा स्कुटी आएर मेरो कारको दाहिनेपट्टि रोकियो । उसले स्कुटी स्ट्यान्ड गरुन्ज्याल कार लक गरेर म बाहिर निस्किसकेको थिएँ । उसले हेलमेट निकै लयबद्धताका साथ टाउकोबाट झिकी । म उसैलाई हेर्दै ढोकाको हेन्डल जाँचेको अभिनय गर्दै थिएँ । उसले साह्रै नै बेवास्थाका साथ एक नजर मतिर हुत्याई, अनि देब्रे हातले हेलमेट समातेर लमकलमक लम्कँदै ऊ मेरै अगाडिबाट गई । ऊसितको मेरो पहिलो भौतिक साक्षात्कार यही थियो ।

उसलाई पहिलो पटक गर्भगृह (बेसमेन्ट) मा देख्दाका दुई बिम्ब म रिवाइन्ड गरेर बेलाबेला सम्झने प्रयास गरिरहन्छु । पहिलो बिम्ब हो सुगन्धको । उसले त्यस दिन केही विशेष विदेशी परफ्यूम प्रयोग गरेकी थिई । र ऊ मेरो अगाडिबाट जाँदा जुन सुगन्धको संसार निर्माण भएको थियो । त्यो आज पनि मेरो मानसमा जहाँको त्यहीँ छ, टक्क अडेको । दास्रो बिम्ब, उसले त्यस दिन साह्रै कसिलो सेतो रङको पाइन्ट र सेतै रङको हाइहिल सेन्डल लगाएकी थिई । कसिएको पाइन्टमा उसका ठूलठूला तर मिलेका गोलाकार नितम्बहरू अटसमटस बनी निसास्सिएर दबिँदै-उकासिँदै गरिरहेका– पछाडिबाट धीत मरुन्जेल मैले हेरेको थिएँ । र ती उछिट्टिएका बिछट्टै मन लोभ्याउने नितम्बहरू उसको अनुहारभन्दा पहिले मेरो मस्तिष्कमा रेकर्ड भएका वस्तु थिए ।

बिल्डिङको तेस्रो तल्लामा ब्याङ्क थियो । एउटा काउन्टरबाट एटीएम कार्डका लागि फारम लिएँ र कुनाको फराकिलो डेस्कमा राखेर भर्न थालेँ । फारम भरिसकेर हस्ताक्षर गर्नै लागेको थिएँ, कुनै स्वास्नीमान्छेले पछाडिबाट आफूलाई डाकिरहेको सुनेँ । उसको आवाज मन्दिरमा झुन्डाइएका ससाना बतासे घन्टी बजेझैँ सुमधुर र टड्कारो थियो ।

फर्केर हेरेँ । उही अन्डरग्राउन्ड पार्किङमा केही छिनअघि देखिएकी युवती मलाई भनिरहेकी थिई, '...एस्क्यूज मी, के म तपाईंको पेन बरो गर्न सक्छु, एकै छिनलाई ?'

'स्योर !' फारममा हस्ताक्षर गरिसकेर पेन उसको हातमा राखिदिँदै मैले उसलाई भोकाएका आँखाले छामछामछुमछुम गरिरहेँ । ऊ फारम भर्नमा तल्लीन थिई ।

काउन्टरमा फारम बुझाइसकेपछि एटीएम कार्ड हात पार्न लगभग घण्टा पौने घण्टा कुर्नुपर्ने बाध्यता दुवैको थियो । ऊ मेरो छेउमा उभिएर मोबाइलमा गफिइरहेकी थिई कसैसँग । म भने उसका एक-एक अङ्ग-प्रत्यङ्ग र हाउभाउलाई नियालिरहेको थिएँ । ऊ हरेक कोणबाट स्मार्ट र सम्भ्रान्त देखिन्थी ।

मैले पनि आफ्नो मोबाइल सेट झिकेँ र उसले थाहा नपाउने गरी विभिन्न कोणबाट उसका आधा दर्जनजति फोटो खिचेँ । ऊ अझ पनि फोनमा कुरा गरिरहेकी थिई ।

फोनमा कुरा सकेर शिर उठाएपछि एकै छिनलाई उसका आँखा मेरा आँखासँग जुधे । सामान्य शिष्टाचारवश ऊ मतिर हेर्दै मुस्काई । मभित्रको अनुभवी खेलाडीले त्यो सुनको सिक्का जस्तो मौका हातबाट उम्कन दिएन । ऊसित कुरा गर्ने बहाना साथै विषयवस्तु दुवै फेला पारिसकेकाले संवाद यसरी थालेँ ।

'पोस्ट पेड हो ?'

'होइन... प्रिपेड हो ।'

'कति भयो लिनुभएको ?'

'जमाना भइसक्यो । अस्ति, माघ १९ मा बन्द हुनुभन्दा एक डेढ वर्षअगाडि लिइसकेकी थिएँ । बरु, तपाईंको सेट मलाई मनपर्‍यो । लेटेस्ट जस्तो छ नि !'

उसको प्रश्नको उत्तर दिँदै मैले निकै ठूलो गफ हाकेँ । हुँदै नभएका दिदी-भिनाजु बोस्टन, अमेरिकामा छन् र यो ने.रु. ९० हजार पर्ने भर्खरै त्यहाँको बजारमा आएको मोबाइल सेट

उनीहरूले एक साताअघि मात्र पठाइदिएको गफ दन्काएँ । मेरा दिदी-भेना अमेरिकामा ग्रीनकार्ड होल्डर छन् भन्ने चारोसहितको बल्छी उसले निकै उत्सुकतासहित निलेकी थिई । त्यसपछि त उसले कुरैकुरामा आफ्नो यूरोप, अमेरिका पुग्ने सपनाका बारेमा बेलीविस्तार नै लगाएकी थिई । लगभग घण्टा पौनेघण्टा कुरा गरिसक्दा पनि उसले आफ्नो नाम 'श्रेया'बाहेक अरू कुनै व्यक्तिगत कुरा खुलाएकी थिइन ।

जे होस्, छुट्ने बेलामा उसको मोबाइल नम्बर मसित थियो । अनि मेरो अर्थात् 'बी. आर.'को मोबाइल नम्बर आफ्नो सेटमा उसले चढाएकी थिई ।

## नायिका माहात्म्य

ब्याङ्कमा भेट भएको पर्सिपल्ट उसलाई मोबाइलमा सम्पर्क गरेको थिएँ । तुरुन्तै उताबाट उही स-साना बतासे घण्टी बजेझैँ टड्कारो तर मोहक स्वर सुनिएको थियो, 'हेलो बी.आर.जी ! यति छिटो सम्झनुहोला जस्तो लागेको थिएन । सम्झनुभएकोमा धन्यवाद ! '

उसले त्यसरी पुरानो परिचितसित कुरा गरिरहेझैँ बातचित थाल्नुलाई मैले उसको सम्भ्रान्त संस्कार साथै उदार मानसिकताको परिचायक ठानेँ र कुराकानीलाई उस्तै पारामा अगाडि बढाएँ ।

शायद चौथो पटक मोबाइलमा कुराकानी हुँदा मैले धेरै भूमिका बाँधेर उसलाई भनेको थिएँ, 'तिमीसित फोनमा कुरा गरेर धीतै मर्दैन । फुर्सत मिलाउन सकिन्छ भने भोलि भेटौँ न ।'

त्यसरी हतारिएर भेट्ने प्रस्ताव राख्दा उसले गलत ठान्ने पो हो कि भन्ने पिरोलोले मुटु ढुकढुक भएको थियो मेरो । केहीबेर ऊ केही नबोली चुप लागेकी थिई । ती क्षणहरूमा मलाई लागेको थियो – मैले हौसिएर हतार गर्दा खेल बिग्रने भयो । शायद ऊसितको सम्बन्ध यसरी नै निमिट्यान्न हुनु थियो । मेरो मनमा लगातार ढ्याङ्ग्रो बज्दै थियो । त्यति नै बेला उसले गह्रुङ्गो आवाजमा सोधेकी थिई, '...कति बेला भेट्ने ?...कहाँ भेट्ने ?'

उसको प्रश्नले सम्पूर्ण संशय उकुसमुकुस र अपराधबोधबाट एकाएक मलाई मुक्ति दिलाएको थियो ।

भोलिपल्ट दिउँसो हामी महँगो रेस्टुराँको एकान्तमा थियौँ । उसले हलुका फिरोजी रङको सर्ट र क्रिम रङको केही खुकुलो पाइन्ट लगाएकी थिई , अनि घाँटीमा उसको क्रिस्टलको टहकदार माला थियो । यति सामान्य प्रसाधनमै ऊ असामान्य लावण्यले भरिएकी देखिँदै थिई । उसले ताजा स्टेबरी जुसबाहेक अरू केही खान मानिन र धेरैबेर बस्दा पनि बसिन । सामान्य कुराकानी मात्र भयो हामीमाझ ।

त्यसपछिका चार-पाँचवटा भेट पनि संक्षिप्त थिए । उल्लेखनीय कुरा वा सम्बन्धमा प्रगति भएन नै मान्नुपर्छ । साँचो भनूँ भने उसको कुलिन र स्मार्ट व्यक्तित्वसामु केही दबिएको महसूस गर्थें म आफूलाई ।

उसलाई त्यसरी पटक-पटक भेटिरहँदा एउटा ठूलो लाभ भने मलाई भयो, उसको व्यक्तित्वका विशेषताहरूलाई नजिकबाट नियाल्ने, बुझ्ने मौका मैले पाएँ । कुनै पनि स्वास्नीमान्छेसित सुन्दर अनुहारबाहेक कुनै एउटा विशेषता हुनु नै पर्याप्त मानिन्छ । तर, उसमा मुहारको विशिष्ट सौन्दर्य त थियो नै, त्यसबाहेक उसको व्यक्तित्वलाई विशेष बनाउने चारवटा अमूल्य सम्पदा थिए ऊसित । पहिलो, आदिम मादकतासहित बलिरहेका उसका दीप्त आँखा, दोस्रो– न अग्लो न होचो साह्रै मिलेको जीउडाल, तेस्रो– सुनिरहूँ सुनिरहूँ लाग्ने उसको मधुर-मोहक आवाज जसमा मान्छेलाई मन्त्रमुग्ध पार्न सक्ने अनौठो मृदुल आवेग र उद्वेलन समाहित थियो; अनि चौथो थियो, उसका मिलेका दिव्य ओठ र ती ओठहरूले उब्जाउने करोडौँ रुपियाँको मुस्कान !

थाहा छैन, कुन्नि किन जति पटक भेट्यो ऊ मलाई त्यतित्यति नै मन पर्दै जान थालेकी थिई । उसमा कुन्नि कस्तो आकर्षण थियो– दिनमा एक पटक मोबाइलमै भए पनि ऊसित कुरा गर्न नपाउँदा म रन्थनिन थाल्थें । सुस्त-सुस्त ऊ मेरो दिनचर्याको आवश्यकता बन्दै जाने क्रममा थिई ।

आठौँ पटकको भेटलाई केही अर्थमय बनाउन मैले उसलाई शपिङ सेन्टरमा लगेको थिएँ र उसलाई मन पर्ने लुगाफाटाहरू कर गरीगरी रोज्न लगाएको थिएँ । पहिलो पटक २२ हजारका लुगा किनिदिँदा, मैले उसमा कुनै असामान्य खुशी वा हर्ष छचल्किएको देखिनँ । दोस्रो पटक ३५ हजारका गहना किनिदिँदा उसले यतिमात्र भनेकी थिई– 'गहना लाउने रहर अब ममा उति छैन ।'

गहना किनिदिएको दिन उसलाई मैले 'ककनीतिर डुल्न जाऊँ भनी प्रस्ताव राखेको थिएँ । एक किसिमसित लयबद्ध ढङ्गले शिर हल्लाउँदै मुस्काएकी थिई ऊ । अर्थात् 'हुन्छ जाऊँ'को सङ्केत दिएकी थिई उसले त्यसरी ।

कारमा हामी ककनी पुगेका थियौँ र फर्कंदा बाटामै अँध्यारो भइसकेको थियो । पहाडी ओरालोमा एक ठाउँमा मैले कार रोकेँ । हामी दुवै बाहिर निस्क्यौँ । तल रातिको काठमाण्डू झिलमिलाइरहेको थियो । हामी जहाँ उभिएका थियौँ परपरसम्मन् त्यो ठाउँ निर्जन थियो, वरपर सब थोक रात्रिको अँगालोमा सामसुम्म थिए । ऊ मेरो काँधमा च्यूँडो बिसाएर तल हेर्दै थिई । तल छरपस्टिएर परपर फिँजिएको काठमाण्डू बिराना बत्तीहरूमा टोलाइरहेको थियो । उसको देहको अपार्थिव सुगन्धले मलाई लठ्याउँदै विभोर तुल्याइरहेको थियो । तिनै क्षणहरूमा उसलाई मैले हातमा समाएर बिस्तारै आफूतिर तानेको थिएँ । आफ्नो सम्पूर्ण सजीवता र आदिम रहस्यहरूसहित ऊ मेरो अँगालोमा बेरिएकी थिई । मैले आफ्ना उत्तप्त ओठहरू लगेर उसका कोमल ओठहरूमा निर्ममतापूर्वक जोतेको थिएँ । उसको सक्रिय सहभागिता थपिँदै गएपछि चुम्बन लम्बिएर प्रगाढ बनेको थियो ।

## 'नायक' अर्थात् 'आफू' – माहात्म्य

*(कुनै चलचित्र पत्रिकामा प्रकाशित अन्तर्वार्ताबाट साभार)*

"अब तपाईंलाई के ढाँट्नु– यो जिन्दगीमा केटी जाबो, कति पटाइयो कति । गिन्ती यकिन छैन, तर सय सवा सयभन्दा बढी नै अविवाहिता, विवाहिता, सदवा, विधवा स्वास्नीमान्छेको मायाजालमा फसियो वा भनौँ फसाइयो होला । अलगअलग उमेर र शरीरका, थरीथरी स्वाद र स्वभावका स्वास्नीमान्छेसित– लसपस, समागम, रतिराग र अभिसारका लामालामा अध्यायहरू उधिनेर आफू पारङ्गत बनेको सम्झँदा मलाई आफैँप्रति गर्वबोध हुन्छ ।

फकाएर हुन्छ कि, ढाँटेर-छलेर हुन्छ कि, अभिनय गरी विचलित तुल्याएर हुन्छ कि, जस्तासुकै स्वास्नीमान्छे लठ्याएको र उनीहरूलाई अघाउन्जेल भोगेर तृप्त बनाएको र आफू तृप्त भएको पूर्वकथाका खातैखात छन् मसित । स्वास्नीमान्छेको माम्लामा मित्रहरू मलाई आधुनिक 'कृष्णजी' अनि एक्काइसौँ शताब्दीको 'क्यासिनोभा' भनी फुर्क्याउँछन् । मित्रहरूले फुर्क्याए पनि नफुर्क्याए पनि मलाई थाहा छ– स्वास्नीमान्छेको माम्लामा उनीहरूले ठानेभन्दा म बढी नै छु हुँला, घटी त कदापि छैन ।

कहिले कतै त म आफैँलाई आफू मायावी छु जस्तो लाग्छ । मायावी आफ्नी स्वास्नीको माम्लामा पनि । स्वास्नी आधुनिक छे, पढेलेखेकी छे, टेलिभिजनमा जागिरे छे र पनि ऊ मलाई लिएर मोहनिन्द्रामै हुन्छे । उसका निम्ति म सधैँ जुनसुकै अवस्था र स्थितिमा पनि 'पतिपरमेश्वर' हुँ / छु । मेरो घरबाहिरको जिन्दगीसित उसलाई कुनै चासो, मतलब, सरोकार वा खसखस केही थिएन / छैन । भन्छे ऊ, 'मर्दका सयवटी जोई' घरबाहिर दशवटी राखून्, त्यो उनको पौरखको कुरो । तर घरभित्र सौता हुल्न ल्याए भने बाँकी राख्दिनँ ।'

स्वास्नीका यिनै कुराले हौसियर पनि होला– परस्त्रीप्रति मेरो लोलुपता अलि बढी नै रह्यो र परस्त्रीगमनका निम्ति म हमेसा लालायीत रहेँ । मेरो कार्यक्षेत्र अर्थात् चलचित्र निर्माण व्यवसायमा म लागेको हुनाले पनि भोगविलासका अवसरहरू आफूले नचाहँदानचाहँदै मलाई आइलाग्ने गर्छन् । तर, परस्त्रीगमन जतिसुकै गरेको भए तापनि

वेश्यागमन भने मैले कहिल्यै गरेको छैन । यस कुरोमा भने कताकता मलाई गहिरो सन्तोष छ ।"

## ...सुनको जाल

ऊ अर्थात् 'श्रेया' मेरो निम्ति सुनको माछी थिई । कहिले महँगामहँगा लुगाफाटा किनिदिएर, कहिले प्लेटिनम र सुनका गरगहना उपहार दिएर म ऊजस्ती सुनको माछीका निम्ति सुनकै जाल बुन्दै थिएँ । शुरूशुरूका भेट र कुराकानीमा ऊ 'अमेरिका ! अमेरिका !!' मात्र अलापिरहन्थी, अनि अमेरिका जाने भिसाका लागि कोशिश गरिदिन मसित बारम्बार आग्रह गरिरहन्थी । मलाई अचम्म लाग्थ्यो र मनमा शङ्काले शिर ठड्याउँथ्यो– ऊ यदि सम्पन्न कुलीन घरानाकी छोरी हो भने उसलाई अमेरिका जाने यत्रो रडाको किन ? अनि आफ्नो चित्त बुझाउँदै आफैंलाई सम्झाउँथें, 'धत् लाटा ! , तँ यति सानो कुरा पनि बुझ्दैनस्– उसको परिवार कुलीन र पुराना धनीमानी भए पनि हाल सम्पन्न नरहेका हुन सक्छन् । अनि अर्को कुरो– ऊ धन कमाउन नभै उच्चशिक्षाका लागि वा कुनै अन्य व्यक्तिगत कारणले पनि त अमेरिका भासिन खोजेकी हुन सक्छे ।'

ऊसित निकै झ्याम्मिसकेपछि पनि कुन्नि के दकसले हो– मैले उसको घरपरिवारबारे सोध्ने आँट बटुल्न सकेको थिइनँ । शायद सोधेको भए ऊ जस्ती खुला मिजासकी केटीले कुरो लुकाउने थिइन पनि होला । तर, मैले नै निच मारेर उसको व्यक्तिगत जीवनतिर बढी चियाउने प्रयोजन ठानिनँ । केही समयपछि भने उसले अमेरिका जाने कुरा गर्न छाडेकी थिई र मैले पनि त्यो अप्रिय प्रसङ्ग नकोट्याउनु नै बेस ठानेँ ।

ककनीबाट फर्केको एक साताजति पछि एकाबिहानै उसले मलाई फोन गरी- '...बी.आर., तपाईंले मलाई के ठानेको हो कुन्नि ?'

'किन ? ...के भयो र श्रेया ?'

'हैन, मलाई भन्न साह्रै अप्ठ्यारो लाग्दै छ ।'

'मसित अप्ठ्यारो मान्नु पर्दैन । भन न, मैले गर्नसक्ने कुरो भए तिम्रा लागि मैले नगरुँला जस्तो लाग्छ तिमीलाई ?' ममाथि उसको जादू प्रसारित हुँदै गएथ्यो ।

'मलाई ५० हजार रुपियाँको खाँचो छ । त्यो पनि आजै ।' उसको मृदुल स्वरमा याचनाको जलप पोतिएको थियो ।

मैले उसलाई ब्याङ्कको एटीएम काउन्टरमा १० बजेतिर आऊ न भनेर ५० हजार झिकेर उसको हातमा केही नसोधी राखिदिएँ । पहिलो पटक उसको अनुहार खुशीले धपक्क बलेको देखेको थिए । उही करोड रुपियाँको दामी मुस्कान उसको मुहारमा फक्रेको थियो ।

५० हजार आफ्नो मनीब्यागमा राखिसकेपछि उसले भनी, 'वास्तवमा रुपियाँको खाँचो भोलिलाई थियो । तपाईंलाई आजै दुक्ख दिएँ । आज म खाली छु । ...नगरकोटतिर घुम्न जाऊँ हुन्न ?'

नगरकोटको एउटा महँगो रिसोर्टको भव्य कोठामा हामीले त्यो ऐतिहासिक दिन गुजारेका थियौं । खेल चुम्बनबाट थालिएको थियो र वासनाको भयावह आँधीबेहरीको वेगवान् मुस्लोमा हामी दुवै पटकपटक छताछुल्ल भइरह्यौं । शायद अप्राप्य कुरो हात परेको मनोविज्ञानले गर्दा- ऊसित गुजारेका सहवासका एकएक पल मेरा निम्ति जीवनकै चरमानन्द र तृप्तिका उत्कर्ष क्षणहरू थिए । त्यस दिन समागम सुखको जुन चरमोत्कर्षमा बारम्बार म पुगिरहें त्यसभन्दा पहिले कुनै स्वास्नीमान्छेको शरीरबाट त्यो स्तरको सुख मलाई अनुभूत भएको थिएन । शायद मैले पनि त्यसपूर्व कुनै पनि स्वास्नीमान्छेको देहलाई यति परिपूर्ण र मूल्यवान् ठानेकै थिइनँ ।

त्यसपछिका दिनहरूमा नगरकोट रिसोर्टमा खेलिएको उही खेल दामन, टिस्टुङ, धुलिखेल र पोखरासम्म पुगेर हामीले फेरिफेरि खेलिरह्यौं । उसलाई जतिजति भोग्यो तृष्णा त्यतित्यति बढ्थ्यो, घट्नुको साटो । उसको शरीरसित खेलेर म अझै अघाएको थिइनँ ।

## देहसुखको हिसाब–किताब

विगत आठ-नौ महीनामा उसले पटक-पटक दुई लाख ४० हजार नगद मसित मागेर लिइसकेकी थिई । उसलाई किनिदिएका लुगाफाटा, गरगहना रिसोर्टमा भएका खर्चहरू र कार पेट्रोलको खर्चसमेत गर्दा झन्डै पौने चार, चार लाखजतिको हिसाब बन्दथ्यो । अब विस्तारै मभित्रको व्यापारी यो देहसुखको मूल्य चर्को हुँदै गएको जोड, घटाउ, गुणा, भाग गर्दै थियो । अनि मैले धेरै सोचविचारपछि निर्णय गरको थिएँ– उसलाई बिहे गरी कान्छी बनाएर बाहिर कतै घर लिएर राख्नमै मेरो कल्याण छ । अबको भेटमा ऊसित कुराकानी गरी टुङ्गोमा पुग्ने निधो गरेपछि त्यस रात म ढुक्कसँग निदाएको थिएँ ।

## एन्टी क्लाइमेक्सः माछा ! माछा !! ...!!!

१. असोज महीनाका शुरूका दिनहरू थिए । हिन्दूहरूको महान् चाड दशैंतिहार नजिकिँदै थियो । चारैतिर त्यसको रमझम थियो । म भने आफ्नो नयाँ निमार्णाधीन चलचित्रको क्लाइमेक्स सिनहरू शुट गराउनमै व्यस्त थिएँ । दशैंअगाडि नै शुटिङ प्याकअप गर्नु थियो जसरी भए पनि । त्यसैले नगरकोटको एउटा पाखोमा सेट लगाएर दिनरात शुटिङ चलिरहेको थियो ।

रातिको साढे १० बज्दै थियो । तर यस बेलासम्म माथि रिसोर्टबाट अर्डर गरेको खाना आइपुगेको थिएन । कलाकार, प्राविधिकहरू सबै भोकाइसकेका थिए ।

म गाडी लिएर रिसोर्टमा पुग्दा रातिको ११ बज्दै थियो । रिसोर्टको भ्यानमा खाना राखेर शुटिङस्थलतर्फ पठाउने तयारी भइरहेको रहेछ । खाना पठाइसकेपछि थकाइ मार्न म रिसोर्टको फराकिलो रेस्टुराँ कम बारभित्र छिरेको थिएँ ।

बार काउन्टरतिर जाँदै गर्दा एक कुनाको टेबुलमा उसलाई मैले देखें । एकाएक त्यहाँ, त्यस बेला उसलाई देख्दा मलाई विश्वास लागेन । तर ऊ नै थिई । उसको साथमा ऊभन्दा २०-२२ वर्ष जेठो अधबैंसे मान्छे बियरको चुस्की लिँदै बसिरहेको थियो ।

उसले पनि मलाई देखिसकेकी थिई र त्यहाँबाट कराई, 'बी.आर.!, तपाईं यहाँ ? ह्वाट अ सरप्राइज ? यतै आउनोस् प्लिज ।'

म उनीहरूको टेबुलनिर गएर उभिएको थिएँ । ऊ र त्यो अधबैंसे दुवै मलाई स्वागत गर्न उभिएका थिए । अधबैंसेले हात मिलाउँदै आफ्नो परिचय दिएको थियो, 'म लालगोपाल पाण्डे । श्रेयाको श्रीमान् ...'

मलाई एक्कासि रिङटा लागेजस्तो भएको थियो । छेउको कुर्सी तानेर म थचक्क बसेको थिएँ । मेरो ओठमुख सुकेको थियो र जिब्रो तालुमा टाँसिएको थियो । छेउमा राखिएको शीशाको जगबाट गिलासमा पानी सारेर घटघट निलेपछि मलाई केही बिसेक भएथ्यो । मेरो परिचय उसले दिएकी थिई, 'उँहा नै हो बी.आर. ढुङ्गेल...'

'ए, अँ, तपाईंको बारेमा यिनीबाट धेरै सुनिसकेको छु । चलचित्र बनाउनुहुन्छ क्यार ! ...' अधबैंसे बर्बराइरहेको थियो ।

'तर उसले त तपाईंको बारेमा मसित कुनै कुरा कहिल्यै गरिन...' भन्न मन लागेको त थियो । तर मेरो मुख टालिएझैं भएको थियो ।

'फुर्सदमा आउनुहोस्, कहिले हाम्रो घरतिर पनि ।' अधबैंसे रमाईरमाई बोलिरहेको थियो ।

'हुन्छ, अब त आउनैपर्ला ।' मैले ऊतिर हेर्दै कटुतालाई पचाउने प्रयास गर्दै त्यतिमात्र भन्न सकें र त्यहाँबाट उठेर बारतिर हान्निएको थिएँ । म बारतिर जानलाई ढुनमुनिँदै उभिँदा ऊ मतिर हेर्दै मुस्काएकी थिई । सधैं करोड रुपियाँको लाग्ने उसको मुस्कान मलाई कौडीबराबरको पनि लागेन, त्यति बेला । साँच्चै त्यो मुस्कान कति अशुभ थियो, कति घृणित र पतीत !

२. त्यहीँ टुङ्गिनुपर्ने हो तर कथा त्यहाँ सकिँदैन ।

अझ दुइटा छोटाछोटा प्रकरण बाँकी छन् सुनाउनैपर्ने । शायद त्यसपछि यस कथालाई अगाडि घिसारिरहनु नपर्ला ।

म फिल्मी मान्छे हुँ । पैसाको कुरोमा म साथीभाइ भन्दिनँ । पैसाको लागि बाउआमा,

भाइबहिनी गलहत्याउन परे गलहत्याउँछु । म जस्तो मान्छे सेक्सको चक्करमा एउटी आइमाईबाट जिल्लिनुपरेको थियो । हरे ! कहाँ घाँस चर्न गएको थियो मेरो बुद्धि ?

एक साँझ आफ्नो गुमेको पैसा फिर्ता पाई पो हाल्छु कि भनी म तिनीहरूको घर खोज्दै पुगें । अधबैंसे मलाई ढोकामा देख्दा पहिले त अक्कमक्क पऱ्यो । पछि एकाएक मुखमुद्रामा नकच्चरोपन उकास्दै भित्रतिर हेर्दै करायो, शिरु !, यता हेर त को आउनु भा'छ ?

ऊ बाहिर आई ! मानौं, हामीमाझ सबै कुरो पहिले जस्तै भएझैं खुशीमा छताछुल्ल हुँदै स्वागतको हाउभाउसहित उसले मलाई बैठकमा लगेर बसालेकी थिई । शरीरमा कसिएको नीलो नीरपानी घरेलु गाउनमा उसको मांसलता साँच्चिकै लोभ्यानेखालको थियो । बैठकमा एउटी चारपाँच वर्षकी हिसी परेकी फुच्ची टिभीमा कार्टून हेर्दै थिई । उसले बैठकमा पुग्नासाथ फुच्चीलाई हकारी, 'भित्र जाऊ शीना । मलाई अङ्कलसँग कुरा गर्न देऊ ।'

'नाइ, म कार्टून हेर्छु के !' फुच्चीले ढिपी कसेकी थिई ।

त्यसपछि ऊ बाहिरतिर हेर्दै च्याट्टिँदै कराएकी थिई, ओ एल.जी. !, लैजाऊ न हो यल्लाई ह्याँबाट ।'

एल.जी. अर्थात् लालगोपाल पाण्डे, उसको श्रीमान् बाहिर जाने लुगा फेरेर बैठकमा आयो र मतिर हेर्दै भन्यो, आज स्याटरडे, छोरीको स्कूल बिदा छ। अलि चकचके छे यो। म यल्लाई लिएर बाहिर जाँदै छु। तीन-चार घण्टापछि फर्किनेछु। तपाई र शिरु रिल्याक्स गर्दै गर्नोस् । कुनै अप्ठ्यारो मान्नु पर्दैन । यसलाई आफ्नै घर ठान्नुभए हुन्छ । '

त्यति भनेर एल.जी. बच्चीसहित ढोकाबाट निस्क्यो र अलप भयो । उसले घरको मूल ढोका थुनिसकेर मतिर हेर्दै चञ्चल हाउभाउका साथ भनी, 'हिँड्नोस् न बेडरूममै जाऊँ ।'

उसको हाउभाउ र बोली-व्यवहारले त्यस साँझ ममाथि पटक्कै असर गर्न सकेको थिएन । सोझै विषयमा प्रवेश गर्दै उसलाई मैले सोधें, 'म आफ्नो पैसा फिर्ता माग्न आएको । मेरो पैसा कहिलेसम्म फिर्ता गछ्यौं, भन ?'

कत्ति पनि विचलित नभई उसले मतिर हेरी र खिसीको हाँसो हाँस्दै भनी, 'तपाईंसित मैले ऋण लिएकी थिइनँ । मोजमज्जाको मोल असुलेकी थिएँ । मलाई लाग्छ- तपाईं र ममाझ हिसाब बराबर भइसकेको छ ।'

मलाई थाहा छ, म अधम छु, महानीच छु । तर उसले जसरी जुन शब्दमा आफ्नो मोल असुलउपर गरेको कुरो उठाएकी थिई, म जस्तो अधमसित पनि उसलाई जबाब फर्काउनका निम्ति एउटै शब्द जगेडा बचेको थिएन ।

त्यस साँझ पराजित पाइलाहरू घिसार्दै उसको ढोकाबाट म फर्केको थिएँ ।

३. सुदूर पश्चिम स्थायी घर भएका र विगत सात वर्षदेखि मेरो छिमेकी मित्र नरदत्त भट्ट सरकारमा धेरै वर्ष रहिसकेको एउटा पार्टीको माथिल्लो तहका कार्यकर्ता हुन् । मान्छे चल्तापुर्जा र सौखिन मिजासका छन् । नाम नरदत्त हो र नारी अर्थात् पोथीका ठूलै रसिया ।

यिनै नरदत्त भट्टले एक साँझ एउटा गार्डेनबारमा रक्सी खाइरहेको बेला कुरा निकाले, 'बाबुरामजी, फिल्म त बनाउनुहुन्छ तर तपाईंलाई काठमाण्डूभित्रका कस्ताकस्ता वास्तविकता थाहा छैन ।'

'कुन वास्तविकताको कुरा गर्नुभएको भट्टजी तपाईंले ?' मैले जिज्ञासा पोखें ।

भट्टजीले दाहिने हातको चोर औंलाले नाकको पोरातिर सङ्केत गर्दै भने, 'मैले यसको कुरा गरेको यसको...मालको । मान्छेहरू त्यसको लागि ब्याङ्कक र मकाउसम्म पुग्छन् । त्याँभन्दा कस्ताकस्ता घरानिया माल यहीं भेटिन्छन्, यै काठमाण्डूमा । तपाईंलाई थाहै छैन, बाबुरामजी, यै एउटा काठमाण्डूभित्र कतिकतिवटा काठमाण्डू लुकेर बसेका छन्...।

मैले भनें, 'भट्टजी, मलाई त्यस्ता ठाउँमा जाने रुचि छैन ।'

'कस्तो कुरा गर्नुभएको तपाईंले ? तेस्तो ठाउँ देख्दै देख्नुभएको छैन भने भोलि आफ्नो फिल्ममा देखाउनुपर्ने भयो भने तेस्तो ठाउँको वास्तविकता भुत्रो देखाउनुहुन्छ, तपाईंले !' भट्टजीलाई रक्सी लागिसकेको थियो । उनी उभिएर आफ्नो विश्वरूप देखाउने अन्दाजमा भने, 'मलाई तपाईंले चिन्नु नै भएको छैन श्रीमान् । ल हिँड्नुस्, तपाईंलाई म आज यस्तो ठाउँमा लैजान्छु जहाँ काठमाण्डूका बडेबडे घरका छोरीबुहारीसमेत बिक्न बसेका भेटिन्छन् । ...ठीक छ तपाईंलाई मन नलागे रमिता हेरेर बस्नुहोला अब त हिँडिदिनोस् प्रभु !'

भट्टजीको विश्वरूपले मलाई पाखुरामा समातेर लगभग घिसार्दै लगी गाडीमा थेचारेकाले मैले नाइँनास्ति गर्न सकिनँ ।

भट्टजीको पछिपछि लागेर त्यस रात जहाँ म पुगें वास्तवमै मेरो निम्ति त्यो काठमाण्डूको नौलो रूप नै थियो । फराकिलो कम्पाउन्ड भएको पुरानो पाराको आर्किटेक्टको भान दिने लगभग २०-२२ कोठाको विशाल घर प्रवेश गर्ने मूलद्वारमै सुरक्षाको कडा व्यवस्था । भट्टजी त्यहाँ आउने जाने गरिरहने चिनिएका प्रभावशाली व्यक्ति भएकाले उनलाई देख्नेबित्तिकै गार्डहरूले स्यालुट ठोक्दै मूल गेट उघारी दिएका थिए । गाडी भित्र चौरमा पार्क गरेर हामी भव्य घरतिर लम्केका थियौं ।

घरभित्रको दुनियाँ अर्कै थियो । सजिसजाउ, झकीझकाउ, हरेक कुनाकाप्चालाई समेत ध्यान पुऱ्याएर आकर्षक पार्ने उपक्रम गरिएको । हरेकतिर उज्यालो । जताततै सजाइएका इन्डोर प्लान्टहरू । कामविह्वलता उब्जाउने एक किसिमको लठ्याउने सुगन्धको महक त्यहाँको वातावरणमा ज्यूँदो थियो ।

निकै ठूलो बैठककोठामा चारैतिर एन्टिक जस्ता लाग्ने सरसमानहरू, अनि एन्टिक जस्तै गद्दादार सोफा र टीटेबुलहरू । एकसेएक रूपसीहरूको जमघट नै थियो त्यहाँ सोफाहरूवरिपरि । भट्टजीले मलाई लगेर ५६-५६ पुगेकी मांसल जीउडालकी एउटी भव्य महिलासामु उभ्याए र उनीसित मलाई परिचय गराए । उनी त्यहाँकी सञ्चालिका रहिछन् । ती महिलाले निकै शिष्ट-सभ्य पारामा त्यहाँको व्यवस्था र व्ययभारबारे मलाई सम्झाएकी थिइन् । भट्टजी त्यसैबीच एउटी परम रूपवतीलाई च्यापेर भित्रतिर गइसकेका थिए । मैले सञ्चालिकालाई आफू त्यहाँ भट्टजीको मन राखिदिनमात्र आएको कुरा गर्दा उनी रमाइलो मानेर हाँसेकी थिइन् ।

रातिको डेढ बज्दै थियो । मलाई सञ्चालिकाले व्यवस्था गरिदिएकाले बैठकमै बसेर खानेपिउने काम गर्दै थिएँ । भट्टजी भित्रबाट आइपुगे र हामी फर्कने तरखर गर्न लाग्यौं । भट्टजीले सञ्चालिकालाई कोटको खल्तीबाट झिकेर हजारहजारका नौवटा नोट दिएको दृश्यले मलाई रोमाञ्चित तुल्याएको थियो ।

ठीक त्यति नै बेला एल.जी. पाण्डेलाई मैले देखें बैठकभित्र प्रवेश गरिरहेको । मनमनै सोचें-'यो यहाँ के गर्दै छ ?' त्यति बेलासम्म उसले मलाई देखेको थिएन । ऊ सरासर सञ्चालिकाको अगाडि पुग्यो र अदबसाथ हात जोर्दै 'नमस्ते हजूर !' भन्यो । सञ्चालिकाले उसलाई कुनै भाउ नदिएको प्रस्ट थियो ।

त्यति नै बेला एल.जी. पाण्डेले मलाई देख्यो, चिन्यो र हात जोर्दै फुसफुसायो, 'नमस्कार बी.आर. ज्यू !, हजूर पनि यहाँ भन्या ?'

मलाई के बोलूँ के बोलूँ भयो र भनें, 'अनि तपाईं चै ह्याँ कसरी नि ?

'म त शिरुलाई लिन आको । यति बेला राति ऊ बिचरी एक्लै कसरी फर्कोस् ! त्यै भएर म...' पाण्डे बर्बराइरहेको थियो, अनि म तीनछक पर्दै त्यति नै बेला भित्रबाट कुनै विदेशी खैरो छालाको पाखुरामा हात घुसारेर बैठकतिर आइरहेको श्रेयालाई हेरिरहेको थिएँ ।

राति कारमा फर्किरहँदा भट्टजीले सोधेका थिए 'बाबुरामजी, के तपाईंले कहिल्यै वेश्यागमन गर्नुभएको छैन ?'

मैले यस प्रश्नको कुनै उत्तर दिइनँ ।

आफूलाई आफैंले भनें, 'अबउसो मैले वेश्यागमन गरको छैन भन्न तैंले नपाउने भइस् बाबुराम !'

●

– पदम गौतम

**हामी सदरमुकाम फर्किएपनि जनयुद्धको तातोले सेलाउदै गरेको रोल्पाको भूमिबाट केही समाचार पाइन्छ कि भन्ने सोचमा लागिरह्यौं । समाचारहरु असरल्ल परेर कुनै ठुला साप्ताहिक वा ठुला दैनिकलाई पर्खिरहेका रहेछन् ।**



# रोल्पाको चिसो र असरल्ल समाचार

मंसिरको अन्तिम साता एउटा साहित्यिक कार्यक्रममा भाग लिनका लागि म अन्य पाँच पत्रकार तथा सर्जक मित्रहरूसँग लिवाङ पुगेँ । त्यहाँ पुगेपछि मान्छेका आकांक्षा र चेतनास्तर बढेपनि उनीहरूको यथार्थ अझ पीडादायी भएको मैले पाएँ । त्यससगै रोल्पाको चिसो स्याँठले त्यहाँका जनतालाई अझै पीडा धेरै बाँकी छ भनिरहेजस्तो लाग्यो ।

भालुवाङबाट माथि लाग्दा नै मैले साथी नवीन विभासलाई वाङ वा बाङ शब्दको अर्थ सोधेको थिएँ । मगर भाषामा बाङ भनेको चौर रहेछ । त्यसैले रोल्पामा जताततै वाङ र बाङ रहेछन् । लिवाङको पर पश्चिम उत्तरतर्फ सहिद स्तम्भ टल्किरहेको थियो । हिँडेर पुग्न तन्नेरीलाई समेत तीन दिन लाग्ने त्यो ठाउँमा बनाइएको स्तम्भले रोल्पाको सम्पूर्ण वस्तीलाई ऊर्जा दिइरहेको जस्तो लाग्दथ्यो । माओवादीले आफनो आधारक्षेत्रमा त्यहाँका जनतालाई उर्जा दिन जनयुद्धकालमा त्यसको निर्माण गरेको थियो । पटक पटक सेना र प्रहरीले भत्काएको करिब पचास मिटर अग्लो त्यो स्तम्भ सबैका लागि हेर्न र ऊर्जा लिएमा प्रेरणादायी विषय बनिरहने देखिन्छ ।

हामी सदरमुकाम छोडेर पहिलो दिन नै माडीचौर बास बस्न पुग्यौ । माडीचौर अत्यन्त लोभलाग्दो ठाउँ रहेछ । माओवादीका चर्चित नेता तथा जनसेना कमाण्डर बर्षमान पुन अनन्तको घर त्यहीँ रहेछ । माडीचौर उनको क्षेत्र भएकै कारण पनि जनयुद्धकालभरि सत्ताबाट बढी पीडित रहेछ । त्यसो त माओवादीले पनि घरमा दुःख दिएको, खसी लगेर खाइदिएको जस्ता पीडा अनन्तका बुवा इकराम र आमा तीर्थमालीले हामीसगं पोखे । तर, सत्ताको उन्मादले पिल्सिएको माडीचौर



यतीबेला झिनो आशा लिएर प्रतिक्षामा बसेको रहेछ । हामीले त्यहाँ रक्सी खोज्दा नपाएको र भोलिपल्ट नेता अनन्तको घरमा रक्सी पार्दै हामीलाई खान आग्रह गरिएको सन्दर्भ माओवादीको सांस्कृति नीतिको कहाँनेर पर्छ भन्ने प्रश्न हाम्रो कानमा पछिसम्म गुन्जिरह्यो ।

आयोजकहरूको फितलो खालको व्यवस्था र त्यसमा पनि हाम्रो पेशाको कारण लाग्ने कौतुहलताले



हामीलाई गम्भीर बनेर बस्न दिँदैनथ्यो । हामी सदरमुकाम फर्किए पनि जनयुद्धको तातोले सेलाउँदै गरेको रोल्पाको भूमिबाट केही समाचार पाइन्छ कि भन्ने सोचमा लागिरह्यौं । समाचारहरू असरल्ल परेर कुनै ठूला साप्ताहिक वा ठूला दैनिकलाई पर्खिरहेका रहेछन् । हामीले आ-आफ्नो रुचि र क्षमताअनुसारको समाचार खोज्ने काम गर्‍यौं । माओवादीले गाउँबाट लखेटेका सयौं मानिस अझै सदरमुकाममा पीडित र विस्थापित जीवन बिताइरहेका रहेछन् । माओवादी नेताहरूलाई यो सन्दर्भ तेर्स्याउँदा उनीहरूले सदरमुकाममा रहेको सबै भन्दा ठूलो भवन देखाए । त्यो भवन विस्थापित बनेर सरकारी सुविधा लिइरहेका दुई दिदीबहिनीको रहेछ । उनीहरूलाई माओवादीपीडित भए पनि त्यति ठूलो घर बनाएकोमा चुट्किलाजस्तो बन्ने भएकाले सात तल्ला भन्दामाथि नथप्न प्रशासनले आदेश दिनु परेछ । माओवादी नेताहरूले अर्को पक्षको ठूलो गल्ती देखाएर आफ्नो गल्ती छोप्न खोजेको प्रस्ट देखियो । अर्कोतिर विस्थापित भेटाइदिने र माओवादी विरोधको धारको नेतृत्व गर्ने कांग्रेस नेताहरूले हामीसँग भेटाइदिएका एक वृद्ध विस्थापितले भने, 'घर त रोजगारी नपाएर पो नगाएको त ।' यसपछि रोल्पाभित्र र खासगरी लिवाङभित्र समाचारका पनि समाचार रहेछन् भन्ने प्रमाणित भयो । हामीलाई पनि समाचारले खासै छुन छाड्यो । कुनलाई कति प्राथमिकता दिने र कुनलाई नदिने ? हामीलाई वास्तवमै द्विविधामा परेको अनुभूति भयो ।

गाउँबाट किनमेल वा प्रशासनिक कामले सदरमुकाम आएका सयौं अनुहार हामीले पढ्न पायौं । हारेको सिपाहीजस्ता कलेटी परेका रोल्पाली ओठहरूसँगै जर्नेलले धोका दिएपछि विद्रोह गर्न नसकेका सिपाहीभित्र रहेको आक्रोश पनि हामीले बुझ्यौं । ती सबै घटनाक्रम र राजनीतिक मार्गका जटिलताहरू बुझेपछि आकांक्षा बढाएर राजनीतिक गर्ने नेतृत्वसँग हामी पनि असहमत भयौं । हाम्रो पनि प्रश्न थियो, 'हाम्रो उत्साह र लगनलाई कुन मूल्यमा बेचेर कसको सेवा गर्‍यौं ?'

सदरमुकाममा ठडिएको साततल्ले भवनले जिल्ला प्रहरी कार्यालय र अन्य केही महत्वपूर्ण ठाउँमा घाम छिर्न दिएको थिएन । छिटै घाम अस्ताएर चिसो हावा हुइकिने लिवाङमा त्यस्तो भवनले छेक्नुअघि अग्ला डाँडाहरूले पनि घाम छेक्दो रहेछ । डाँडाले छेकेर लिवाङ पुगेको घाम निजी घरले छेके पछि लिवाङ कहिले तात्ला र भन्ने मलाई लाग्यो । मलाई यो दृश्य आफैंमा एउटा कविताजस्तो लाग्यो । मलाई रोल्पाले कविता लिपिबद्ध गर्न लगाएझैं लागिरह्यो । मैले लेखेँ :

**अरु सदरमुकामजस्तै यहाँ पनि**
**उसैगरी उज्यालो बाडेजस्तो गर्दै आउँछ घाम**
**र समय निल्दै जान्छ**
**अग्ला डाँडाहरूमा छेकिँदै**
**लिवाङ छिरेको घामको किरण**
**फेरि ठोकिन्छ अग्ला महलमा**
**र, चिसै हुन्छ लिवाङको माटो ।**

-१९ पुस,२०६५

*(फोटो १: जिल्लाकै अग्लो घर ।*
*फोटो २: सुलिचौरबाट देखिएको हिमाल )*

●

– सानुराजा शिल्पकार



# व्यवसायलाई कुनै रंग दिनुपर्दैन

कुनै पनि इन्टरनल लिभिङ स्पेसमा हुने क्रियाकलाप र ती क्रियाकलापलाई आवश्यक पर्ने सामग्रीहरूलाई सुव्यस्थित रुपमा सजावट गर्ने कार्यलाई नै इन्टेरियर डिजाइन डेकोरेसन भनेर बुझ्नुपर्दछ । त्यसका लागि उक्त स्थानको फ्लोर ट्रिटमेन्ट, वाल ट्रिटमेन्ट, कलर कम्बिनेसन, सिलिङ डिजाइन तथा त्यस स्थान र प्रयोजनअनुसारको आकार, प्रकार, प्याटर्न टेक्सचरलगायत आवश्यकताअनुसारका फर्निचर, लाइट तथा साज▯सज्जा सामग्री सबैलाई हार्मोनाइज गर्नु आवश्यक हुन जान्छ । इन्टेरियर डिजाइन आफैंमा एउटा व्यापक क्षेत्र हो । यसका आफ्नै दर्शन, मूल्य र मान्यता छन् । यो एउटा कला हो र यसलाई व्यसायका रूपमा अवलम्वन पनि गर्न सकिने प्रशस्तै अवसर छन् । जसका लागि यसको विषयगत अध्ययन गर्न जरुरी छ ।

१९८२ मा मुम्बईको स्कुल अफ आर्टमा इन्टेरियर डिजाइन सिकाइन्छ भन्ने कुरा मैले मेरा आफन्तबाट थाहा पाएँ । आफ्नो पुर्ख्यौली पेसा पनि यही भएकाले मैले परिवारबाट पनि प्रोत्साहन पाएर उक्त स्कुलमा भर्ना भइ इन्टेरियर डिजाइनमा स्पेसलाइजेसन पूरा गरें । उक्त अध्ययनको लगत्तै मैले रोयल इजिप्ट एम्बेसी बंगलादेशमा आफ्नो सीप देखाउने मौका पनि पाएँ । त्यसपछि मैले जापानको अन्तर्राष्ट्रिय प्रदर्शनीमा इन्टेरियर तथा काष्ठकलासम्बन्धी काम गर्न पाएँ । मेरो अध्ययन र अनुभवले यस क्षेत्रमा निरन्तर थप अध्ययन र तथा अभ्यासको अवसर पाएँ । उक्त सिलसिलामा मैले पोखरा इन्जिनियरिङ क्याम्पसको इन्टेरियरसम्बन्धी काम, इटालीमा उडवर्किङ सम्बन्धी स्पेसलाइजेसन, थाइलेन्डमा प्रोडक्ट डिजाइन डेभलोपमेन्ट सम्बन्धी अध्ययन, अहमदावादमा कम्पिटिटिभ एड्भान्टेजेज थ्रु डिजाइन कोर्सलगायत हिमाल एक्सपोमा तीन वर्षसम्म अफिसियल डेकोरेटरको काम गरेर पेसागत रूपमा स्थापित हुने मौका पाएँ ।

मेरो जन्मथलो, कर्मथलो पाटन काष्ठकलाका लागि प्रख्यात स्थान हो । प्राचीन कालदेखि नै कला, संस्कृतिको धनी यस स्थानलगायत यस्तै अन्य ठाउँलाई पनि कला र सिर्जनाको केन्द्रका रूपमा विकास गर्दै लानुपर्ने आजको आवश्यकता हो । त्यसको अलावा हामीमा निहित सीप र क्षमतालाई व्यावसायिक बनाउनु अपरिहार्य छ । जसका लागि अध्ययन, अनुसन्धान, अभ्यास, अनुभव र अनुभुति जरुरी हुन्छ । आजको युगमा व्यावसायिकताका लागि प्रविधिको प्रयोग पनि उत्तिकै महत्वपूर्ण छ । अहिलेको विश्वव्यापीकरणको युगमा नेपालमा दक्ष जनशक्ति उत्पादन गरी वैदेशिक रोजगारी तथा स्वदेशमै बसेर विदेशको इन्टेरियर डिजाइनिङ तथा प्रोडक्ट डिजाइनको काम गर्न सकिने राम्रो सम्भावना छ, तर यसका लागि प्रवर्द्धन तथा प्रचारप्रसारको पनि आवश्यकता पर्दछ ।

काष्ठकला र इन्टेरियर डिजाइन दुवै मेरा लागि उत्तिकै रुचि र पेसाका विषय हुन् । सिर्जनात्मक व्यापकताका दृष्टिले म इन्टेरियर डिजाइनलाई उत्कृष्ट मान्छु भने प्रोडक्ट डिजाइनको हिसाबमा काष्ठकला मेरा लागि बढी रुचिको विषय बन्छ । पेसागत रूपमा म नेपाली इन्टेरियर डिजाइनरहरूको संगठन इन्टेरियर डिजाइन एसोसिएसन नेपाल (73686965 7869806576) को केन्द्रीय अध्यक्षको हैसियतले यस क्षेत्रलाई व्यवस्थित, मर्यादित र आकर्षक पेसा बनाउनका लागि आफ्नो कार्यकाल भरि भरमग्दुर प्रयत्न गर्नेछु । विश्वभरि छरिएर रहेका नेपाली इन्टेरियर डिजाइनरहरूलाई यही सञ्जालमा ल्याउने र अनुभवीहरूबाट नवप्रतिभाहरूमा ज्ञान तथा उत्साहको सञ्चार गराउने प्रयास गर्नेछु ।



मैले व्यावसायिक रूपमा इन्टेरियर डिजाइन र काष्ठकलाका धेरै कामहरू गरें । ती मध्ये एउटा महत्वपूर्ण काम विश्वहिन्दु महासंघका लागि पूर्व राजा▯रानी ज्ञानेन्द्र तथा कोमल बस्ने सिंहासनको डिजाइन तथा निर्माण गरें । सायद राजा▯रानी वा राष्ट्रप्रमुख दम्पती बस्ने यो विश्वकै एकमात्र सिंहासन हुनसक्छ । २०६२ सालमा राजाको शासनकालमा मैले गरेको यो कामलाई कतिपयले राजनीतिक रङ दिन खोजे पनि मैले नितान्त व्यावसायिक भूमिका निर्वाह गरेको हुँ । कला, सिर्जना र व्यवसायलाई कुनै अन्य रङ दिन जरुरी छ जस्तो मलाई लाग्दैन । ●